# आश्रम गतिविधि

१-७: फाल्गुण ९ गते (फेब्रुअरी २१) को दिन सम्पन्न दिव्य गुरु महोत्सव कार्यक्रम।

८-१५: फाल्गुण महिनामा सम्पन्न विभिन्न मासिक हवन कार्यक्रमहरु ।

● वर्ष ११ ● अङ्क ८ ● चैत्र २०६६ ● पूर्णाङ्क १२८

## सम्पर्क कार्यालयहरू


- **चितवन**, भ.न.पा- २, क्षेत्रपुर फोन: ०५६-५२१३८५
- **गोरखा**, सौरपानी–३ पोखरी, फोन: ९७४६०१८८७८, ९७४११२७७४५
- **कास्की**, पो.उ.म.न.पा.-१०, रामघाट, फोन: ०६१-५३०७८६
- **सर्लाही**, बरहथवा-७, एस्माली टोल, फोन: ०४६-५४००११
- **पाल्पा**, तानसेन, फोन: ९८४७०-२८१८८
- **ललितपुर**, लगनखेल, फोन:२२२००२१
- **गोरखा**, बसपार्क, फोन: ०६४-४२०३४८
- **तनहुँ**, दमौली, व्यास गुफा, फोन: ०६५-५६१६६२
- **लमजुङ**, बेँसीशहर, भीमसेनटोल
- **भक्तपुर**, कटुन्जे-१, फोन: ०१-६२१३४५५
- **काभ्रे**, बनेपा, न.पा. कार्यालय पछाडि फोन: ०१-६२२५१७२
- **कास्की**, लेखनाथ चोक, फोन: ०६१-२२९१९०
- **सिन्धुली**, रातमाटा फोन: ९८४४०४०८९९
- **स्याङ्ग्जा**, स्याङ्ग्जाबजार फोन: ९८४६०-४४३५४
- **चितवन**, गौरीगञ्ज
- **सिन्धुपाल्चोक**, बाह्रबिसे फोन: ०१-६९१६५९३
- **कास्की**, अर्चलबोट, विन्ध्यवासिनी
- **काठमाडौँ**, पुरानोबानेश्वर, फोन: ०१-२१०११२६
- **काठमाडौँ**, सिमलटार
- **काठमाडौँ**, तीनकुने (मुनि भैरव)
- **ललितपुर**, गोदावरी


पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं
***सिद्धाश्रम शक्ति केन्द्रद्वारा प्रकाशित***

## तन्त्र विशेष

मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-

| | |
|---|---|
| आफ्नै कुरा | ३ |
| तन्त्र | ६ |
| सम्बन्धः तन्त्र र मन्त्रको | १० |
| मन्त्र विज्ञान रहस्य | १० |
| सद्‌गुरु र तन्त्र विज्ञान | १४ |
| तन्त्रविद्या | १६ |
| तन्त्र सिद्धि र पञ्चमकार | १९ |
| आऊ, म बनाउँछु तिमीलाई तान्त्रिक | २१ |
| श्री शिव गोरक्ष नाथंप्रदाय | २९ |
| परमपूज्य सद्‌गुरुदेवको अवतरण यात्रा | ३२ |
| चैत्र २०६६ का शुभ समयहरू | ३३ |
| क्रियायोगको पूर्णता | ३४ |
| रंग ध्यान विधि | ३७ |
| ध्यान साधनामा गुरुको महत्त्व | ३९ |
| आफ्नो हात आफैँ हेरौँ | ४० |
| विद्याश्रम-पृष्ठ | ४२ |
| योग र कुण्डलिनी | ४३ |
| बहुउपयोगी फल अंगुर | ४५ |
| सम्पर्क कार्यालय तीनकुने, काठमाडौँ | ४९ |
| आश्रम गतिविधि | ५० |
| जाँदा जाँदै | ५२ |

# जानकारी

सिद्धाश्रम शक्ति केन्द्र प्रचलित नेपाल कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, काठमाडौँमा रहेको छ । परमपूज्य सद्‌गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो । आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ । यो केन्द्र महान् गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ । यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत सोझै निर्देशित छन् । यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राण-प्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ । त्यसैले एक स्वतन्त्र र आफैमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्‌गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन् । त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो । प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ । विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिको सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुऱ्याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ । यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ । साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ । साथै, आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिक पत्रिकामा प्रकाशित लेख, रचना, चित्रादिमा संस्थाको सहमति हुन आवश्यक नरहेको व्यहोरा अवगत गराइन्छ ।

## आश्रमका नियमित कार्यक्रमहरू

**प्रत्येक साँझ ५ बजे गुरु आरती । प्रत्येक बृहस्पतिबार बिहान १० बजे गुरु पूजन । प्रत्येक अंग्रेजी महिनाको २१ तारीख दिव्य गुरु महोत्सव कार्यक्रम । प्रत्येक महिनाको पहिलो सोमबार पशुपति मृगस्थलीस्थित श्री श्री महायोगी गुरु गोरखनाथको मन्दिर प्रांगणमा श्री शिव गोरक्ष हवन, पहिलो मंगलबार लगनखेलस्थित वटुक भैरव मन्दिर प्रांगणमा तान्त्रोक्त वटुक भैरव हवन, पहिलो बुधबार लगनखेलस्थित महालक्ष्मी मन्दिर प्रांगणमा तान्त्रोक्त महालक्ष्मी हवन तथा पहिलो बिहीबार पाटन कुम्भेश्वरस्थित बगलामुखी मन्दिर प्रांगणमा तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम सञ्चालन । विभिन्न चाडपर्वहरूमा विशेष कार्यक्रम । गोरक्ष निखिल वाणी आध्यात्मिक शक्ति अनुसन्धानमूलक मासिकको प्रकाशन । विभिन्न एफ.एम. स्टेशनहरूमार्फत् गोरक्ष निखिल सन्देश रेडियो कार्यक्रम सञ्चालन । समाजमा आध्यात्मिक शिक्षा लागू गराउनका लागि गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमको सञ्चालन । तान्त्रिक ध्यानका विभिन्न चरणका कक्षाहरू । समय समयमा विशेष साधना कार्यक्रमहरू । प्राणप्रतिष्ठित तान्त्रिक सामग्रीहरूको वितरण । समस्या समाधानका लागि परामर्श सेवा । असाध्य रोगका लागि तान्त्रिक हिलिङको व्यवस्था ।**

## परामर्श सेवासम्बन्धी सूचना

परमपूज्य सद्‌गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको असीम कृपास्वरूप सिद्धाश्रम शक्ति केन्द्रमा परामर्श सेवासम्बन्धी सुविधा निम्नानुसार रहेको जानकारी गराइन्छ ।

| बार | स्थान |
|---|---|
| आइतबार | काठमाडौँ (तीनकुने आश्रम) |
| आइतबार | भक्तपुर (कटुञ्जे आश्रम) |
| सोमबार | काठमाडौँ (बसुन्धरा आश्रम) |
| मंगलबार | ललितपुर (लगनखेल आश्रम) |
| बुधबार | काठमाडौँ (सिमलटार आश्रम |
| बिहीबार | काठमाडौँ (बानेश्वर आश्रम) |
| समयः अपराह्न ३:०० बजेपछि | |


**आवरण तथा भित्री कम्प्युटर सेटिङ्ग**
सिद्धाश्रम शक्ति केन्द्र, कम्प्युटर उपविभाग
www.ssk.org.np, info@ssk.org.np

**मुद्रण**
**भेराइटी प्रिन्टर्स प्रा.लि.**
कुलेश्वर, काठमाडौँ ।

**पत्रिकाको कार्यालय**
**बसुन्धरा, काठमाडौँ, नेपाल**
**फोन नं: ०१-४३८९१५४, पत्रिका वितरण फोन नं: ०१-६२२५१७७** (CDMA Phone), URL: www.gnv.org.np, Email: info@gnv.org.np

# आफ्नै कुरा

समयले आफ्नो रफ्तारसँगै आध्यात्मिक गतिविधिहरुलाई अगाडि बढाएको छ। हिजोका दिनहरुमा भन्दा आजभोलि अध्यात्मतर्फ मानिसहरुको रुचि बढेको पाइन्छ। प्रायःजसो व्यक्तिहरु कुनै न कुनै सम्प्रदायसँग अथवा कुनै न कुनै धर्मगुरुसँग जोडिएको पाइन्छ। चाहे जे होस्, अध्यात्मतर्फको लगाव क्रमिकरुपमा बढेको पाइन्छ। अध्यात्म नै सम्पूर्ण मानवको कल्याणको मार्ग हो। यसैको सहाराले, यसैको माध्यमले जीव, जगत्, सृष्टिका गूढ रहस्यहरु उजागर गर्न सकिन्छ। त्यसैले हामी अध्यात्म क्षेत्रमा अगाडि बढ्दै छौँ भने सही र सत्य सद्गुरुलाई आफ्नो आधार बनाऔँ र जीवनलाई सार्थक बनाऔँ।

सद्गुरुको अभावमा उचित मार्ग नपाएर अन्धकार, अन्यौलमा गुज्रिरहेका सम्पूर्ण व्यक्तिहरुका लागि सिद्धाश्रम शक्ति केन्द्र एउटा अनुपम केन्द्र बनेको छ, आस्था, विश्वास र श्रद्धाको केन्द्र बनेको छ। त्यसैले पनि सद्गुरुको अभाव महसुस गर्नुभएको छ भने आजै सम्पर्क गरी गुरु प्राप्त गरेर जीवनलाई धन्य बनाउनुहोस्।

यसपालिको अंकलाई 'तन्त्र विशेष'को रुपमा निकाल्ने कोशिश गरेका छौँ। तन्त्र आफैँमा एउटा प्रणाली हो, विज्ञान हो, महाविज्ञान हो। तन्त्रले नै मानवलाई व्यवस्थित बनाउँछ। मनलाई व्यवस्थित, तनलाई व्यवस्थित, जीवनलाई व्यवस्थित बनाउँछ। समाजलाई व्यवस्थित बनाउने, सारा जनलाई व्यवस्थित बनाउने, देशलाई व्यवस्थित बनाउने कार्य तन्त्रको माध्यमबाट सम्भव छ। त्यसैले पनि हाम्रो समाजमा तन्त्र शब्दको प्रयोग भए पनि व्यवहारिक प्रयोग कमै मात्र भएको पाइन्छ। प्रजालाई व्यवस्थित पार्ने प्रजातन्त्र, लोकलाई व्यवस्थित पार्ने लोकतन्त्र, अर्थव्यवस्थालाई व्यवस्थित पार्ने अर्थतन्त्र, स्व अर्थात् आफैलाई व्यवस्थित पार्ने स्वतन्त्र, हेर्दै गयौँ भने सबैतिर तन्त्र नै तन्त्र छ। तर यसको सही सदुपयोग नहुँदा व्यवस्थितको साटो अव्यवस्थित, अनियन्त्रित, भद्रगोलको स्थिति देशमा देखा परेको पाइन्छ। तन्त्रको सही र सफल प्रयोग हुन नसक्नु नै आजको विडम्बना हो। त्यसैले तन्त्रलाई चलाउन सक्ने, हाँक्न सक्ने सफल तान्त्रिकको खाँचो छ। जो अध्यात्ममा आधारित भएर अगाडि बढ्छन्, उनीहरु नै सफल तान्त्रिक बन्न सक्छन् र देश र जनतालाई सही मार्ग देखाउन सक्छन्।

तन्त्रको क्षेत्र व्यापक छ। तन्त्रको आधारमा नै जीव, जगत्, सृष्टि व्यवस्थितरुपमा अगाडि बढेको छ। त्यसैले तन्त्र कुनै संकुचित, डरलाग्दो विषय नभई मानवकल्याणको मार्ग हो। यसको सही र सत्यरुपमा प्रयोग हुनु आवश्यक छ। यस अंकमा तन्त्रसम्बन्धी विभिन्न प्रसंगहरु कोट्याउने कोशिश गरेका छौँ। तन्त्रको क्षेत्र विशाल भएकोले यस पत्रिकामा अरु कैयौँ प्रसंगहरु समेट्न सकिएन। बाँकी खोज, अनुसन्धान, तपाईँहरुलाई जिम्मा लगाउँदै आगामी अंकहरुमा पनि समेट्ने कोशिश गर्ने नै छौँ।

अन्तमा, यस अंकमा भए गरेका कमी कमजोरीहरुका लागि परमपूज्य सद्गुरुदेवहरु समक्ष र यहाँहरु समक्ष पनि क्षमा माग्दै आवश्यक सल्लाह, सुझावको अपेक्षा राख्दछौँ। अस्तु।

परमपूज्य सदगुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज

परमपूज्य सदगुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ

**मानव जीवनमा गुरुको सर्वथा उच्च स्थान मानिन्छ । गुरु प्राप्तिबिना मानव जीवन व्यर्थ छ । सम्पूर्ण शास्त्रको सम्यक् ज्ञान भए पनि, धन सम्पत्ति र रूप लावण्यले भरिपूर्ण भए पनि, समस्त प्रकारका सिद्धि, शक्ति र ऐश्वर्यले भरिपूर्ण भए पनि यदि गुरु प्राप्त भएको छैन भने मानिस अपूर्ण नै हुन्छ किनकि गुरुले नै संसार सागरबाट तारेर हामीलाई मोक्षको भागीदार बनाउनुहुन्छ, हामीलाई असीम आनन्दबाट तृप्त गरेर पूर्ण गरिदिनुहुन्छ । यसप्रकार पूर्णता, मुक्ति अनि अनगिन्ती सिद्धि र शक्ति प्रदान गर्नुहुने दुई सद्गुरुदेवहरूलाई सिद्धाश्रम शक्ति केन्द्रले धारण गरिरहेको छ । गुरुहरूको महिमा, गरिमा र परिचय कसले पो दिन सक्छ र ? तैपनि सामान्य जानकारीसम्मका लागि महान् गुरुहरूको संक्षिप्त परिचय दिएका छौँ–**

## परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज

*वन्दे नारायणं देवं सद्गुरुं निखिलेश्वरं ।*
*ज्ञानामृतरसेनैव पूतं येनाखिलं जगत् ॥*

यस विश्व ब्रह्माण्डलाई भौतिक एवं आध्यात्मिकरूपले सन्तुलित राख्न प्रकृतिद्वारा निर्मित अद्वितीय तपस्थली नै सिद्धाश्रम हो । मानव जीवनको अन्तिम ध्येय यस सिद्धाश्रमका प्राणाधार परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज हुनुहुन्छ । आफ्ना गुरु स्वामी सच्चिदानन्दज्यूको आदेश शिरोपर गरी 'धर्मसंस्थापनार्थाय...'को शंखघोष गर्दै उहाँ सन् १९३३ अप्रिल २१ तारीखमा भारतस्थित राजस्थान प्रान्तको जोधपुरमा अवतरित हुनुभयो । वेदाध्ययनबाट शिक्षा शुरु गर्नुभएका उहाँको विवाह बाह्र वर्षको उमेरमा भगवती देवीसँग भयो । आफ्नो जीवन परिवारको लागि मात्र नभएर सम्पूर्ण समाजको लागि हो भन्दै विवाहपश्चात् उहाँले थुप्रै वर्ष हिमालयका गुफा, विकट कन्दरा र जंगलहरूमा संन्यास जीवन बिताउनुभयो । त्यसबेला उहाँले विभिन्न स्वामी, संन्यासी, योगी, तान्त्रिक, मान्त्रिक, आयुर्वेदाचार्यहरूसँग भेटेर विभिन्न विधामा आफूलाई निष्णात् बनाउनुभएको थियो । संन्यास जीवनपश्चात् पुन: गृहस्थमा फर्केर आफूले प्राप्त गरेको आध्यात्मिक ज्ञानलाई समाजमा फैलाउने कार्य गर्नुभयो । यसको लागि सयौं पुस्तकहरूको रचना गर्दै असंख्य शिविर सञ्चालन गरी साधना, प्रवचन र दीक्षाको माध्यमबाट शिष्य निर्माण प्रक्रियालाई जोड दिनुभयो । यसरी ज्योतिष, सामुद्रिक शास्त्रका सुविज्ञ ज्ञाता, तन्त्र-मन्त्रका अन्तिम नाम, आधुनिक धन्वन्तरि, सम्मोहन विज्ञानका मसीहा, कुण्डलिनी शक्तिका सहज व्याख्याकार, सूर्य विज्ञानका अपूर्व ज्ञानी, धुरन्धर रत्न चिकित्सक आदिका रूपमा उहाँ **डा. नारायणदत्त श्रीमाली**को नामबाट विश्वमा विख्यात् हुँदै महामहोपाध्याय, मन्त्र शिरोमणि, समाज शिरोमणि, जगद्गुरु आदिको संज्ञाले विभूषित हुनुभयो । आगामी गोरक्ष निखिल युग निर्माणको महायोजना आफ्ना शिष्यहरूको काँधमा सुम्पेर सन् १९९८ जुलाई ३ मा महाप्रयाण लिई उहाँ आफ्नो मूल स्थान सिद्धाश्रम फर्कनुभयो । हाल सद्गुरुदेवकै सूक्ष्म आदेश निर्देशनबमोजिम सिद्धाश्रम शक्ति केन्द्र यस महान् योजनामा कटिबद्ध छ ।

## श्री श्री महायोगी गुरु गोरखनाथ

*अनन्त कोटि ब्रह्माण्ड गोरक्ष स चराचम् ।*
*दर्शनम् मुक्ति लाभं च तस्मै श्री गोरक्ष नमः ॥*

श्री श्री महायोगी गुरु गोरखनाथ सम्पूर्ण गुरुहरूमा महागुरु, सम्पूर्ण योगीहरूमा महायोगी, सम्पूर्ण नाथहरूमा महानाथ हुनुहुन्छ । महायोगी श्री श्री गुरु गोरखनाथ भगवान् शिवका सबैभन्दा महत्त्वपूर्ण र प्रमुख अवतारको रूपमा पूजित हुनुहुन्छ । योग मार्गको प्रचारको लागि भगवान् शिवले नै गोरक्ष रूप धारण गर्नुभएको हो । यसैले उहाँलाई श्री शिव गोरक्षको रूपमा आदर-सम्मान गर्ने गरिन्छ । गो शब्दको अर्थभित्र समाहित गाई, पृथ्वी, इन्द्रिय, आदि सम्पूर्णको रक्षा गर्ने गोरक्ष नै हुनुहुन्छ । श्रीमद्भागवत, नारदपुराण, स्कन्दपुराण, ब्रह्माण्डपुराण, शिवपुराण, शाक्तप्रमोद, गोरक्षगीता आदिमा उहाँको बारेमा उल्लेख भएको छ । विश्वको इतिहासलाई हेर्दा उहाँको प्राकट्य सयौं हजारौं वर्षको अन्तरालमा विभिन्न स्थानमा भएको पाइन्छ । यसबारे विभिन्न विद्वान्हरूले थुप्रै अनुसन्धान गरेका छन् । आमाको कोखबाट नभई आवश्यकता अनुसार आफै प्रकट हुनुहुने महायोगी अजर अमर कायायुक्त हुनुभएको कुरा स्पष्ट हुन्छ ।

नेपालको सन्दर्भमा हेर्दा गोरखा राज्यको नामाकरण उहाँको नामबाट भएको पाइन्छ भने उहाँकै आशीर्वादबाट यो राष्ट्र कहिल्यै पराधीन बन्नु नपरेको गौरवशाली इतिहास रहेको छ । उहाँको ऋण चुकाउन पनि हामीले उहाँको भक्ति गर्नैपर्दछ । नाथपंथका अग्रज महानाथ गुरु गोरखनाथ नेपालका राष्ट्रगुरु हुनुहुन्छ । नेपालमा विभिन्न ठाउँमा उहाँका मठ-मन्दिरहरू छन् जस्तै गोरखाको गोरख गुफा, पशुपतिको मृगस्थली पीठ, हनुमानढोकाको काष्ठमण्डप आदि । सिद्धाश्रम शक्ति केन्द्रको अनुसन्धानअनुसार गुरु गोरखनाथ सर्वप्रथम यस धरतीमा वैशाख शुक्ल पूर्णिमाको दिन गोरखाको गोरख गुफामा प्रकट हुनुभएको थियो । नेपालमा मात्र नभएर विश्वभर उहाँको सम्प्रदाय, मन्दिर एवं मठहरू स्थापित छन् । आगामी गोरक्ष निखिल युग निर्माणको लागि गोरक्ष शक्ति जगाउँदै नाथ परम्परालाई समाजमा स्थापित गर्न सिद्धाश्रम शक्ति केन्द्र गतिशील छ ।

# सिद्धाश्रम शक्ति केन्द्र

## (आध्यात्मिक शक्ति अनुसन्धान संस्था)

सिद्धाश्रम शक्ति केन्द्र, आध्यात्मिक शक्ति अनुसन्धान संस्थाको स्थापना ०५६ वैशाख ८ गते भए पनि यसको विधिवत् दर्ता भने ०५६ वैशाख २३ गते मात्र भयो । परमपूज्य सद्गुरुदेवहरू श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजलाई गुरुरूपमा धारण गर्दै यो संस्था शुरुमा केही वर्ष काठमाडौँको कमलादीबाट सञ्चालन भयो । त्यसपछि बत्तीसपुतली, पुरानो बानेश्वर हुँदै संचालन भएको यस संस्थाको केन्द्रीय कार्यालय हाल बसुन्धरामा रहेको छ ।

समस्त भूमण्डललाई गोरक्ष निखिल ऊर्जाले आपूरित गर्दै गोरक्ष निखिल युग स्थापनार्थ अघि बढिरहेको यस संस्थाले विभिन्न आध्यात्मिक गतिविधिहरूलाई अघि बढाइरहेको छ । मुलुकभर विभिन्न सम्पर्क कार्यालयहरूमार्फत आफ्ना गतिविधिहरू अघि बढाइरहेको यस संस्थाले विभिन्न ठाउँमा स-साना एकाइहरूको गठन गरेर पनि समाजमा आध्यात्मिक गतिविधिलाई अघि बढाइरहेको छ । संस्थाका विभिन्न सम्पर्क कार्यालयहरूमा बिहीबारको गुरु पूजन, दिव्य गुरु महोत्सव, विभिन्न चाडपर्वमा पूजनादि कार्यक्रमहरू सम्पन्न भइरहेका छन् भने विदेशमा रहेका यससँग सम्बन्धित एकाइहरूले पनि आध्यात्मिक गतिविधिमार्फत विश्वमा आध्यात्मिक शीतलता छरिरहेका छन् ।

संस्थाले प्रत्येक महिना काठमाडौँ उपत्यकालगायत अन्य स्थानहरूमा रहेका विभिन्न शक्तिपीठ र मन्दिरहरूमा तान्त्रोक्त हवनहरू सञ्चालन गर्दै आइरहेको छ भने प्रत्येक वर्ष यस संस्थाले गोरखास्थित गोरख गुफामा श्री श्री महायोगी गुरु गोरखनाथको चरणकमलमा सवालाख रोट चढाउँदै आइरहेको छ । यसका अतिरिक्त कैयौँ मन्त्र हवन साधना, तान्त्रोक्त साधना, ध्यान, महोत्सव आदिका कार्यक्रमहरू सञ्चालन गरिसकेको छ भने गोरक्ष निखिल वाणी मासिकलाई निरन्तररूपमा प्रकाशित गरिरहेको छ । एकातिर आध्यात्मिक पत्रिकामार्फत संस्थाले आध्यात्मिक गतिविधिलाई समाजसामु लगिरहेको छ भने अर्कोतिर गोरक्ष निखिल सन्देश नामक साप्ताहिक रेडियो कार्यक्रमबाट पनि यसले आफ्नो अभियानलाई तीव्र बनाइरहेको छ । समाजमा योग्य, सबल, चरित्रवान् नागरिकहरूको उत्पादनका लागि शैक्षिक मिशनअन्तर्गत गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रम सञ्चालन गरिरहेको यस संस्थाका विभिन्न तह र तप्कामा रहेका कार्यकर्ताहरूका लागि मासिक प्रशिक्षण तथा तालिमको पनि व्यवस्था हुँदै आएको छ ।

हाल अ.ना.प. शैली अपनाएर अगाडि बढिरहेको यो संस्थाको सांगठनिक स्वरूपअन्तर्गत सम्पर्क कार्यालयहरूको सञ्चालन भइरहेको छ भने यसै शैलीभित्र क्षेत्रीय कार्यालयहरूको पनि विकास भइरहेको छ । संस्थाको विकास र विस्तार हुने क्रममा कतिपय सम्पर्क कार्यालयका आफ्नै भवन बनिसकेका छन् भने कतिपयमा भवनका लागि जग्गाको व्यवस्था भइसकेको छ । थुप्रै सम्पर्क कार्यालयहरूमा विभिन्न स्तरका ध्यानका कार्यक्रमहरूका अतिरिक्त परामर्श सेवालगायत तान्त्रिक हिलिङ्ग पनि सञ्चालन भइरहेका छन् । यसप्रकार यो केन्द्रले आध्यात्मिक युग निर्माणको दिशामा अग्रणी भूमिका निर्वाह गरिरहेको छ ।

# आत्मिक निवेदन

*आत्मीय पाठकवर्ग,*

*'गोरक्ष निखिल वाणी' पत्रिका यहाँहरुलाई कस्तो लागिरहेको छ? अनेक बाधा, अड्चन एवं समस्याहरुका बावजुद पत्रिकालाई निरन्तरता दिँदै प्रबुद्ध पाठकहरुको कसीमा आफूलाई घोट्दै शुद्धता एवं स्तरीयतामा क्रमशः वृद्धि गर्दै जाने हाम्रो संकल्प एवं प्रयास रहँदै आएको छ। भौतिकतामा चुर्लुम्म डुबेको आजको समाजमा एउटा आध्यात्मिक पत्रिकालाई नियमितता दिनु र आफ्नो खुट्टामा उभिन सक्ने बनाउनु भनेको निश्चय पनि असम्भवजस्तो लाग्दछ। तर परमपूज्य सद्गुरुदेवहरुको आशीर्वादले यो असम्भवलाई सम्भव बनाउने कार्य तपाईंहरुबाटै भइसकेको छ। पत्रिकालाई युगौँ-युगसम्म जीवन्त राखी आउँदो पुस्तालाई हाम्रो आध्यात्मिक धरोहरको रुपमा हस्तान्तरण गर्ने जिम्मेवारी पनि तपाईं, हाम्रै काँधमा आएको छ।*

*प्रत्येक व्यक्ति स्वयं आध्यात्मिक पथमा अग्रसर भई आफ्नो परिवार, टोल, छिमेक, समाज, गाउँ, सहर, जिल्ला, अञ्चल हुँदै सम्पूर्ण देश अनि सम्पूर्ण विश्वलाई नै अध्यात्ममय बनाउने महान् अभियानलाई मूर्तरुप दिन पत्रिका सबैभन्दा सशक्त माध्यम बन्न सक्छ। अतः पत्रिका सदस्यता विस्तारको कार्यक्रममा यहाँहरुको सहयोगको अपेक्षा गर्दछौं।*

*पत्रिकाको बिक्री मूल्य रू. ३०।- मात्र भएकोले तपाईंले कम्तीमा दसवटा पत्रिका मगाएर आफ्ना नाता-गोता, छरछिमेकमा बाँड्न सक्नुहुन्छ। तपाईंको घर, टोल, छिमेक वा नातागोतामा कहीं पनि पूजा-आजा, हवन, विवाह, व्रतबन्ध, सप्ताह, जन्मदिन, मेला, पर्व, महोत्सव आदि हुँदैछन् भने त्यहाँ पत्रिकाको स्टल राखेर यसको महत्त्वबारे जानकारी गराउनुका साथै वार्षिक सदस्यताको लागि प्रेरित गर्न सक्नुहुन्छ।*

*यसका अलावा टाढा-टाढा रहेका आफ्ना नाता-गोता, मित्रजनलाई हुलाकमार्फत पत्रिका पठाउन सक्नुहुन्छ। यसो गर्दा आत्मिक सम्बन्ध अझ प्रगाढ हुन जान्छ।*

*यो पत्रिका यहाँहरुको आफ्नै भएकोले यसलाई फलाउने, फुलाउने र फैलाउने जिम्मा पनि यहाँहरुकै हो। यसैले, सम्पूर्ण पाठकहरुमा हाम्रो आत्मिक निवेदन छ– आफूलगायत कम्तीमा पाँचजना वार्षिक सदस्य बनाउने संकल्प आजकै दिनदेखि गरौँ।*

*यहाँहरु सबैको सहयोगले पत्रिकाको सदस्य सङ्ख्या निरन्तररुपमा वृद्धि हुँदै जानेछ जसले गर्दा पत्रिकालाई अझ स्तरीय एवं आकर्षक बनाउन मद्दत मिल्नेछ भन्ने कुरामा हामी विश्वस्त छौं।*

*वार्षिक सदस्यताको लागि रु. ३५०।- (अक्षरेपी रु. तीन सय पचास मात्र) हामीलाई पठाउनुहोस्। त्यसपछिको बाँकी काम हामी गर्नेछौं।*

*अन्तमा, आत्मीय पाठकवर्गहरुमा विनम्र अनुरोध छ कि पत्रिकाको स्वयंले अध्ययन गरौं एवं आफ्नो परिवार तथा इष्टमित्रलाई पनि पढ्न अनुरोध गरौँ। यसका अलावा अन्य पाँचजना व्यक्तिलाई पढाउने प्रयास गरौँ।*

*संसारको सबैभन्दा ठूलो दान ज्ञान दान हो, तपाईंको सानो दानले कसैको जीवनमा नयाँ मोड आउन सक्छ, जीवनमा सदाबहार छाउन सक्दछ। त्यसैले परमपूज्य सद्गुरुदेवहरुको महान् योजनालाई मूर्तरुप दिँदै चरितार्थ गराउन आजदेखि गुरु कार्यमा सहभागी बनौँ र यस योजनालाई आ-आफ्नो तरीकाबाट सहयोग गरौँ।*

*पत्रिकाको बिक्री हाम्रो उद्देश्य होइन, अपितु परमपूज्य सद्गुरुदेवहरुको असीम अनुकम्पाले प्रत्येक जन-जनमा गोरक्ष निखिल ऊर्जाको सञ्चार गरी आध्यात्मिक युगको पुनः निर्माण गर्नु हो। अस्तु।*

**तनोति विस्तारयति ज्ञानं येन यस्मात् वा तत् तन्त्रम् ।**
**तन्यते विस्तार्यते त्रायते वा येन यस्मात् वा तत् तन्त्रम् ।**

संस्कृत शब्द 'तनु'बाट तन्त्र शब्द बनेको हो । तनुको तात्पर्य हो– चेतनाको विस्तार । यससित 'त्र' धातु मिलेर ज्ञान र चेतनाको विस्तार अनि रक्षाको बोध हुन्छ । मनुष्यमा रहेको ज्ञानशक्ति र चेतनाको विस्तार गर्नु तन्त्रको साधारण अर्थ हो । शरीर तथा मनलाई आधिभौतिक, आधिदैविक तथा आध्यात्मिक तीनै प्रकारका ताप अथवा दुःखहरूबाट त्राण दिनु र भयमुक्त गर्नु तन्त्रको काम हो ।

भगवान् शिवले बताउनुभएको सिद्धान्त वा विचारलाई 'निगम' मानिन्छ । ती विचारहरूलाई आफ्नो उद्देश्य पूर्तिका लागि अपनाइने क्रिया पद्धति नै 'आगम' हो ।

महानिर्वाण तन्त्रका अनुसार सत्ययुगमा श्रुतिअनुसारको धर्मको सार्थकता रहन्छ, श्रुति अर्थात् ऋषिमुनि, ज्ञानीहरूले बताएका बाटोबाट हिँड्नाले मानवजीवनले पूर्णता प्राप्त गर्छ । यसैप्रकार त्रेतायुगमा स्मृतिअनुसार चल्नाले धर्मको सार्थकता रहन्छ । द्वापरयुगमा पुराणअनुसार चल्नाले धर्मको सार्थकता सिद्ध हुन्छ । कलियुगमा भने आगमअनुसार चल्नाले धर्मको सार्थकता रहन्छ ।

यसप्रकार महानिर्वाण तन्त्रमा भगवान् शिवको श्रीमुखबाटै प्रकट भएकोछ– सृष्टिको प्रारम्भदेखि नै मैले चारै विधिहरू (श्रुति, स्मृति तथा पुराण एवं आगम शास्त्र) लाई स्पष्ट गरेको छु । कलियुगमा श्रुति, स्मृति र पुराणको धेरै महत्त्व हुँदैन किनकि यी तीनैमा ऋषिहरूले र मैले भनेका वचनलाई प्राथमिकता दिइएको छ । कलियुगमा मानिसले प्रत्येक कार्यलाई जाँचेर मात्र सम्पन्न गर्दछ । यसकारण यस युगमा उसका लागि आगम विधान नै सर्वश्रेष्ठ मार्ग हुन्छ किनकि आगम मार्गमा ज्ञान, चेतनाको विस्तारका लागि उपासनाको विस्तृत वर्णन पाइन्छ । आगम शास्त्र व्यावहारिक पद्धति हो र यसैअनुसार मानिसले साधना तथा उपासना गर्दछन्, आफ्नो जीवनमा त्यसलाई जाँचेर स्वयं प्रयोगमा ल्याउँछन् । तब मात्र उसको जीवनमा गति सम्भव हुन्छ ।

## तन्त्रको उत्पत्ति र विकास

तन्त्रको उत्पत्ति वेदसँगसँगै भएको हो । प्रारम्भिक अवस्थामा वेदलाई आधार मानिएको थियो र यसका लागि निगम शब्दको प्रयोग भएको पाइन्छ । यस निगम शास्त्रलाई व्यावहारिकरूपमा ल्याउनका लागि जुन क्रिया पद्धति बन्यो, त्यसलाई आगम भनियो । यस दृष्टिले हेर्ने हो भने आगम र निगम दुवै नै एक अर्काका समानान्तर हुन् । वस्तुतः तन्त्र एउटा प्रक्रिया र साधना पद्धति हो तथा वैदिक ऋषिहरूले जुन महाविद्याहरूको साधना गरेका थिए, मूलरूपमा ती तन्त्रसँग सम्बन्धित छन् र यसै तन्त्रको एउटा विशेष आधार शक्ति तत्त्व साधना हो । यस परम्पराको वर्णन वेदमा स्पष्टरूपमा गरिएको पाइन्छ ।

वैदिक ऋचा तथा तान्त्रिक मन्त्रहरू साक्षात्कार गर्ने ऋषिहरू समान हुन् । त्यस्तै वेद विज्ञानीहरूले तान्त्रिक जगत्मा पनि निकै प्रसिद्धि कमाएका थिए । यीमध्ये तारा महाविद्या तथा श्रीविद्याका ऋषि साधकहरूको उल्लेख विशेषरूपमा आउँछ । महर्षि वशिष्ठ तारा महाविद्याका ठूला उपासक थिए तथा लोपामुद्रा, अगस्त्य, दुर्वासा इत्यादि महर्षि श्रीविद्याका महान् उपासक थिए । श्रीविद्याका उपासकहरूमा पच्चीस ऋषिहरूका नाम विशेषरूपमा प्राप्त हुन्छन् । उहाँहरूको सम्बन्धमा श्री विद्यार्णव तन्त्रमा लेखिएको छ–

**मनुश्चन्द्रः कुबेरश्च लोपामुद्रा च कामराट्,**
**अगस्त्य नन्दि सूर्याश्च विष्णु स्कन्द शिवास्तथा ।**
**दुर्वासाश्च महादेव्याः द्वादशोपासकाः स्मृता,**
**शक्रश्चोन्मना चैव तथा च वरुणस्ततः ।**
**धर्मराजोऽनलो नागराजो वायुर्बुधस्तथा,**
**ईशानश्च रतिश्चैव तथा नारायणोऽपि च ।**
**ब्रह्मा जीवो महादेव्यास्त्रयोदश उपासकाः,**
**पंचविंशति संख्योपासकानां महेश्वरि ।**

अर्थात्, मनु, चन्द्र, कुबेर, लोपामुद्रा, कामराज, अगस्त्य, नन्दी, सूर्य, विष्णु, स्कन्द, शिव दुर्वासा, महादेवी शक्र, उन्मना, वरुण, धर्मराज, अनल, नागराज, वायु, बुध, ईशान, रति नारायण, ब्रह्मा इत्यादि पच्चीस ऋषिले तन्त्र साधनाको विकास गरे ।

यसैप्रकार महाकाली तन्त्रका प्रमुख उपासक भैरव ऋषि हुन् । ताराका विशेष साधक वशिष्ठ ऋषि तथा श्री विद्या षोडशका विशेष उपासकमा माथि वर्णित ऋषिहरूका अतिरिक्त श्री गौडापादाचार्य, श्री गोविन्दपादाचार्य तथा शंकराचार्यको नाम विशेषरूपमा लिइने गरिन्छ । श्री गौडापादाचार्यद्वारा लिखित ग्रन्थ श्री विद्यारत्न सूत्र तथा शंकराचार्यरचित ग्रन्थ सौन्दर्यलहरी विशेषरूपमा महत्त्वपूर्ण छन् जसमा श्रीविद्या एवं तान्त्रिक साधनाको विस्तारपूर्वक वर्णन भएको पाइन्छ । यस विवरणबाट यो स्पष्ट हुन्छ कि दार्शनिक दृष्टिले कुनै पनि ऋषि जुनसुकै दर्शनका व्याख्याता भए पनि तत्त्वबोध एवं ज्ञानको साक्षात्कार उनीहरूलाई तान्त्रिक साधनाहरूबाट नै प्राप्त हुन सक्छ र यस दृष्टिले तन्त्र साम्प्रदायिक नभएर साक्षात्कारको वैज्ञानिक पद्धति हो ।

शंकराचार्यले आफ्नो ग्रन्थमा उल्लेख गरेको गुरु परम्पराको बारेमा स्पष्ट हुन्छ कि तन्त्र साधनाको ज्ञान आदिगुरु शिवबाट शिष्यहरूलाई र ती शिष्यहरूबाट फेरि अन्य पिँढीतिर प्रसारित भएको हो । शंकराचार्यका अनुसार गुरु-शिष्य परम्परा निम्न रूपले भएको देखिन्छ– आदिगुरु शिवबाट वशिष्ठ, शक्ति, पराशर, व्यास, शुकदेव, गौडपाद, गोविन्दपाद र शंकरको क्रम रहेको छ । यसैप्रकार भुवनेश्वरी महाविद्याका प्रमुख उपासक शक्ति ऋषि, त्रिपुर भैरवी महाविद्याका दक्षिणामूर्ति ऋषि, छिन्नमस्ताका प्रमुख उपासक भैरव ऋषि, धूमावति महाविद्याका उपासक पीप्पलाद ऋषि, बगलामुखी महाविद्याका उपासक नारद ऋषि, मातङ्गी महाविद्याका उपासक मतङ्ग ऋषि, कमला महाविद्याका उपासक भृगु ऋषि हुन् ।

यी सबैबाट यो निष्कर्ष निक्लन्छ– वैदिक परम्पराका मान्य आचार्यहरूले पनि तान्त्रिक साधना र शक्ति उपासनालाई पूर्णरूपमा महत्त्व दिएर यी साधनाहरूलाई सम्पन्न गरेका थिए । तन्त्र साधनाको विकासका साथसाथै यसमा नयाँ नयाँ खोज पनि हुँदै गएर यो वैज्ञानिक साधना पद्धति बन्यो । तन्त्र साधनाअन्तर्गत जुन विद्या र प्रक्रियाहरू मुख्यरूपमा जोडिए तिनीहरूलाई बेग्लाबेग्लै नाम दिइए पनि यी सबै तन्त्रका क्रियाहरू नै हुन् । तन्त्र क्रियाअन्तर्गत निम्न प्रक्रियाहरू जोडिएर तन्त्रलाई पूर्ण बनाएका छन् । उपर्युक्त प्रक्रियाहरू निम्न छन्– १. योग २. मन्त्र ३. लययोग ४. नादयोग ५. कुण्डलिनीयोग ६. हठयोग ७. राजयोग ८. ज्ञानयोग ९. भक्तियोग १०. अर्चन । यसप्रकार तन्त्र महाविद्या यस्तो विज्ञान हो जसमा योगका सारा प्रक्रिया समाहित भएका छन् ।

तन्त्र सम्बन्धमा निम्नलिखित विशेष श्लोक पनि पाइन्छ–

**यत्रास्ति भोगो न च तत्र मोक्षो यत्रास्ति मोक्षो न च तत्र भोगः ।**
**श्री सुन्दरी सेवन तत्पराणां भोगश्च मोक्षश्च करस्थ एव ॥**

अर्थात् जहाँ संसारमा भोग छ, त्यहाँ मोक्ष प्राप्त हुन सक्दैन, जहाँ मोक्ष छ त्यहाँ सांसारिक भोग प्राप्त हुन सक्दैन । तर त्रिपुरासुन्दरीको उपासना गर्ने साधकलाई भौतिकता तथा आध्यात्मिकता दुवैको प्राप्ति हुन्छ ।

तन्त्र आफैमा एउटा प्रक्रिया हो । यसको मूल लक्ष्य स्पष्ट छ । तन्त्रको लक्ष्य तीन प्रकारले गरिन्छ । प्रथम ज्ञानको प्राप्ति, दोस्रो आत्मसाक्षात्कार र तेस्रो हो त्रिविध तापहरूबाट मुक्ति । यी तीन लक्ष्यहरूको प्राप्तिबाट नै जीवन मुक्त हुन सक्दछ र यसका लागि तन्त्रमा जीवन जिउने सिद्धान्ततिर विशेष ध्यान दिएर यस जगत्का सारा कार्यहरू र तिनका

क्रियाहरूलाई सहीरूपमा सम्पादन गर्नमा विशेषरूपमा जोड दिइएको पाइन्छ। त्यसैले तन्त्रले भोग र मोक्ष दुवैको विरोध गर्दैन । सामान्यत: जहाँ भोग छ त्यहाँ मोक्ष हुन सक्दैन र जहाँ मोक्ष छ त्यहाँ भोगका लागि कुनै स्थान रहँदैन भन्ने सामान्य मान्यता रहेको छ । यसैले संसारमा दुई प्रकारका विचारधारा पाइन्छन् । चार्वाक ऋषिले पूर्णतया भोगलाई जोड दिएका छन्, भोगका लागि नै जीवन प्राप्त भएको उनको विचार थियो । अर्काथरि ऋषिहरूले जीवनमा पलायनवादी सिद्धान्तलाई मान्दै जन्म, बन्धनबाट मुक्तिको मार्ग केवल मोक्षलाई नै बताए। भोगलाई जीवनको बन्धन माने । तर तन्त्र उपासक र सत्य उपासक भोग र मोक्ष दुवैको विरोधबाट रहित हुन्छन् । जीवनमा तन्त्र सिद्धान्तअनुसार भोग आवश्यक छ। शक्ति साधनामा आत्मसाक्षात्कारमाथि विशेष जोड दिइएको छ। कुण्डलिनी साधना, षट्चक्र जागरणमाथि पनि विशेष बल दिइएको पाइन्छ किनकि यिनीहरूकै माध्यमले अचेतन मनका विभिन्न स्थितिहरूलाई जान्न सकिन्छ ।

## तन्त्र साधना पद्धतिको प्रभाव

आफ्नो वैज्ञानिकता तथा विशिष्टताका कारण तन्त्रले अन्य साधना पद्धतिहरूलाई प्रभावित गर्दै रह्यो । केही पद्धतिहरू साम्प्रदायिक हुनाले विपरीत पनि प्रतीत हुन्छन् तर ऐतिहासिक परिप्रेक्ष्यमा दार्शनिकरूपले विश्लेषण गर्ने हो भने यो स्पष्ट हुन्छ कि अनेकौं विधानमा, अनेकौं प्रक्रियामा तन्त्रले तिनीहरूलाई प्रभावित पारेको छ र तिनका साधना पद्धतिहरूमा योगदान दिएको छ । यसको कारण यो हो कि तन्त्रको पद्धति वैज्ञानिक छ तथा सर्वाङ्गीण पनि। अन्य पद्धतिहरूले आफ्नो अपेक्षा र रुचिअनुसार तन्त्रका एक वा अधिक अङ्गलाई ग्रहण गरेर आफ्नो पद्धतिलाई गतिशील बनाउने चेष्टा गरेको पाइन्छ ।

तन्त्रले साधना क्षेत्रमा केही यस्तो खोज गरेको छ जुन तन्त्रभन्दा पूर्व थिएनन् र त्यसमा आत्मसाक्षात्कारका केही यस्ता सूत्र पनि छन् जुन कैयौं दृष्टिले विभिन्न अवस्थामा साधकका लागि धेरै सुविधाजनक र उपयोगी हुन सक्छन्। वैदिककालमा साधनाको स्वरूप यज्ञ र वैदिक ऋचाहरूको पाठ गर्नु थियो । मन्त्रजप र यसको पुरश्चरणको विधान थिएन । तन्त्रले नै वाचिक, उपांशु वा मानसिक जपका दुई रूपलाई विहित गऱ्यो । मन्त्रको लक्षवृत्ति, द्विलक्ष र चतुर्लक्षावृत्तिजस्ता कुराहरूको विधान गरेर यो बताएको छ कि जप आवश्यक मात्र होइन, चेतनाको पूर्ण परिष्कारका लागि अत्यावश्यक पनि हुन्छ। तन्त्रमा जपलाई वैज्ञानिक स्तरमा ग्रहण गरेको छ र त्यहाँ यो ध्वनि सिद्धान्तको आधारमा प्रभावकारी हुन्छ। मन्त्रद्वारा सूक्ष्म ध्वनि तरङ्ग तैयार हुन्छ र यसले स्नायु मण्डललाई प्रभावित गर्दै संस्कारको पनि परिष्करण गर्छ । यसबाट मन्त्र आफ्नो स्वरूपलाई स्पष्ट गर्नमा समर्थ हुन्छ र आत्मा पनि आफ्नो स्वरूपको स्थितिमा अवस्थित हुने स्थितिमा आउँछ । अरू पद्धतिमा देखिने मन्त्रजप पद्धति तन्त्रको नै देन हो ।

बीज मन्त्रहरूको खोज तन्त्रले गरेको हो । वेदमा छन्दमा आबद्ध ऋचाहरू छन् । तर तन्त्रले बीज मन्त्रको खोजी गऱ्यो। जस्तै, अग्निको बीज मन्त्र रं हो, वायुको यं, आकाशको हं, पृथ्वीको लं। यसैप्रकार षट्चक्र र विभिन्न देवताहरूका बीज मन्त्रलाई तन्त्रले खोजेर निकाल्यो। विभिन्न वर्णहरूको विशेष प्रकारको योगबाट एकाक्षरदेखि लिएर शताक्षरसम्मका मन्त्रहरूको प्रणयन गऱ्यो, प्रयोग गऱ्यो तथा त्यसको स्वरूपको साक्षात्कार गऱ्यो । तन्त्रको अन्वेषणको प्रभाव अन्य साधना पद्धतिहरूमा पनि पऱ्यो र यो प्रभाव यति व्यापक भयो कि कुनै पनि साधना पद्धतिमा मन्त्रको उपयोग हुन थाल्यो। पतञ्जलिले पनि आफ्नो योगसूत्रमा '**जपः तदर्थ भावनम्**'को विधान गरे। जुन साधना पद्धति केवल भक्तिको हो, जहाँ बाह्यार्चन नै प्रमुख छ र मानसिक धरातलमा केवल भावको प्रधानता छ, त्यहाँ पनि मन्त्रजप साधना आवश्यक अङ्ग बन्न पुग्यो। यो पनि तन्त्रको नै देन हो।

यन्त्रको विधान तन्त्रको खोज हो । तन्त्रले यन्त्रको माध्यमबाट सृष्टि प्रक्रियालाई रेखाङ्कित गऱ्यो । यो एक प्रकारको प्रतीक हो र यन्त्रमा आफ्नो उपास्य तथा त्यससँग सम्बन्धित सम्पूर्ण निराकार एवं साकार प्रतीकहरूलाई स्थापित गऱ्यो। तन्त्रमा मूर्ति पूजाको विधान थिएन। जसको रूप कल्पना गरेर ध्यानको श्लोक बनाइएको थियो, त्यस देवताको मूर्तिको पूजाको विधान पनि थिएन र त्यसको अर्चन यन्त्रमै हुन्छ । मूर्ति पूजाको विधान त तन्त्रमा पछि मात्र थपिएको हो। आज पनि अन्य साधना पद्धतिहरूमा जुन यन्त्र पूजनको विधान देखिन्छ, त्यो तन्त्रको नै देन हो।

यसप्रकार अन्य साधना पद्धतिहरूमा मन्त्र र यन्त्र दुई

रूपमा तन्त्रबाट स्थानान्तरित भयो । या त तन्त्रले केही साधना पद्धतिहरूका लागि स्वयं विधान तयार गरिदियो अथवा केही साधना पद्धतिले केही स्थानहरूमा मात्रै तन्त्रको आधारमा आफ्नो विधान निर्माण गरे ।

प्रश्न उठ्छ– जो निराकारवादी छन्, उनीहरू निराकारको चिन्तन गर्छन् । तर निराकारको उपासना कसरी हुन सक्छ ? उपासनाका लागि आकार चाहियो, रूप चाहियो । दार्शनिक दृष्टिले हेर्ने हो भने पनि मूल निराकार नै हो र तान्त्रिक उपासनाको लक्ष्य पनि निराकार नै हो । तन्त्रले त्यस निराकारको प्रकृति एवं लक्ष्य पनि प्रकृतिअनुसार विविधरूपमा विभाजित गरेर भावको तृप्तिका लागि एउटा आधार खोज्यो र त्ससको उपासनामा पञ्चोपचार एवं षोडशोपचारबाट बाह्य पूजनको पनि विधान गऱ्यो । यो पञ्चोपचार र षोडशोपचारको तान्त्रिक विधान यथावत्‌रूपले अन्य पद्धतिहरूमा पनि गयो, यसउसले यहाँ पनि अन्य साधना पद्धतिहरू तन्त्र पद्धतिका ऋणी देखिए ।

तन्त्रले आफ्नो पद्धतिलाई सधैं नै सन्तुलित राखेको छ । त्यसमा रूपका साथ अरूपको साधना समान स्तरमा चल्दछ । जति बाह्यार्चनको विधान छ त्यसभन्दा बढी जोर अन्तरार्चनमाथि गरिन्छ । जप, प्राणायाम, धारणा, ध्यान, समाधि आदि साधनाका अङ्गहरू साथै चल्दछन् । भूतशुद्धि र तत्त्वशोधन पनि तान्त्रिक साधनाका अङ्ग हुन् । षट्‌चक्र भेदन र कुण्डलिनी योग पनि यसैअन्तर्गत आउँछन् । तन्त्रमा तत्त्व चिन्तनसँगै भावभक्तिको पनि स्थान छ । गुरु तत्त्वको पनि तन्त्रमा सबैभन्दा ठूलो महत्त्व रहेको छ । यसप्रकार तन्त्रका अरू पनि कैयौं महत्त्वपूर्ण अङ्ग छन् । तर अन्य साधना पद्धतिहरूमा तन्त्रबाट एक वा एकभन्दा धेरै अङ्गहरू ग्रहण गरेको पाइन्छ । अन्य साधना पद्धतिहरूले समग्र अङ्गलाई ग्रहण नगरेको हुनाले अन्य साधना पद्धति तन्त्रजस्तो समग्र र सर्वाङ्गीण हुन सकेन । तर एक अङ्गलाई मात्रै पनि विकसित गरेर अनेक साधना पद्धतिहरूले एउटा सीमासम्म उत्कृष्टता प्राप्त गरेको देखिन्छ जुन उसलाई तन्त्र स्रोतबाट प्राप्त भएको हो ।

प्राचीनकालदेखि मध्यकालसम्म विभिन्न साधना पद्धतिहरूमा तन्त्रको प्रभाव ग्रहण गर्ने प्रक्रिया चलेको देखिन्छ । वैष्णव पद्धति त तन्त्रअन्तर्गत नै आउँछ तर जहाँ वैष्णवमा विरोधको प्रश्न छ, त्यहाँ पनि त्यसको प्रक्रियामा तान्त्रिक पद्धतिको धेरै हदसम्म समावेश भएको पाइन्छ । विरोधको स्वरले समग्रतासँग नभई तन्त्रका एकाध आधारसँग सम्बन्ध राख्दछ । यसरी नै अन्य साधना पद्धतिहरूलाई पनि यसै परिप्रेक्ष्यमा हेर्न सकिन्छ ।

बौद्धधर्ममा त तन्त्रलाई प्रत्यक्षत: पूर्णरूपमा स्वीकार गरिएको छ । यस दृष्टिले त्यसको एउटा शाखा वज्रयान अत्यन्तै महत्त्वपूर्ण छ । बौद्धहरूले तन्त्रलाई आफ्नै किसिमले विकसित गर्नमा पनि योगदान गरेका छन् । उनीहरूले चीनाचारको माध्यमबाट पनि धेरै कुरा ग्रहण गरेका छन् । तारा महाविद्या उनीहरूकी मुख्य उपासिका हुन् ।

जैनधर्ममा पनि तन्त्रको प्रभाव पर्याप्तरूपमा देखिन्छ । तान्त्रिक देवता र तान्त्रिक पद्धतिहरूको प्रभाव र प्रवेश उनीहरूको धर्म साधनामा एक सीमासम्म देखिन्छ ।

यसप्रकार न्यूनाधिक मात्रामा सबै धर्म साधना पद्धतिहरू तन्त्रबाट प्रभावित भएका छन् र तन्त्रको योगदानबाट आफूलाई विकसित तथा पूर्ण बनाउने प्रयासमा छन् । तर यसबाट कुन पद्धतिलाई कति सफलता प्राप्त भयो भन्ने बेग्लै कुरा हो । कुनै पद्धतिले तन्त्रको योग तत्त्वलाई लिएर आफूलाई विकसित गरे भने केहीले योगका साथसाथै अन्य अङ्गहरूलाई पनि सामेल गरेर विकसित गरे । यसप्रकार तन्त्र प्रत्येकका लागि एउटा जीवन पद्धति हो जसलाई अपनाएर भौतिकता र आध्यात्मिकतामा पूर्णता प्राप्त गर्न सकिन्छ ।

जय गुरुदेव !

# सम्बन्ध : तन्त्र र मन्त्रको

तन्त्र सिद्धान्तमा मन्त्रलाई आत्मसाक्षात्कार, कुण्डलिनी जागरणको सबैभन्दा ठूलो साधनको रूपमा स्वीकार गरिएको पाइन्छ । मन्त्र विभिन्न वर्ण तथा अक्षरहरूको योगबाट बन्दछ । अक्षर कहिले पनि नष्ट हुँदैन । सूक्ष्म स्थितिसम्म यो निरन्तररूपमा व्यापक भएर तरङ्गित हुन जान्छ । यसैकारण शब्दलाई ब्रह्म मानिन्छ । जसैजसै मन्त्र सूक्ष्म अवस्थामा पुग्दछ, त्यति नै यो शक्तिशाली हुन जान्छ । शब्दका चार अवस्था हुन्छन्– १. वैखरी २. मध्यमा ३. पश्यन्ती ४. परा ।

वैखरी अवस्था शब्दको प्रकट र स्थूलरूप हो । सामान्यजीवनमा हामी जे बोल्छौं, त्यो सामान्य शब्द हुन्छ । यसै शब्दको उच्चावस्था मध्यमा स्थितिमा निर्दिष्ट शब्दहरूको उपयोग गरिन्छ । मन्त्रजप अन्तरबाटै हुनुपर्दछ अर्थात् मनबाटै गरिनुपर्दछ । जब यो मनबाट निस्कन्छ तब पुनः वर्तुल हुँदै मनभित्रै प्रवेश गर्दछ । यसैले मन्त्रजप वा मन्त्रोच्चारण गर्ने बेलामा कसैले पनि दुर्वचन, दुःशब्द बोल्न सक्दैन किनकि मन्त्र मध्यमामा आन्तरिक स्थितिसँग जोडिएको हुन्छ । यसपछि मन्त्र सूक्ष्म चक्रमा जान्छ तब आत्मसाक्षात्कार आत्मबोधको स्थिति बन्छ । यसप्रकार मन्त्रलाई तन्त्र तथा शक्ति साधनाको सबैभन्दा समर्थ साधन मानिएको पाइन्छ ।

**तन्त्र, पूजा र यन्त्र**

तन्त्रमा साधनाको बेला विभिन्न प्रकारका यन्त्रहरूको पूजा गरिन्छ । यो मूलरूपमा आफ्नो आत्मालाई इष्टदेवताको

# मन्त्र विज्ञान रहस्य

'**मननात् त्रायते इति मन्त्रः**' जसको मननबाट दैहिक, दैविक र भौतिक आघातहरूबाट रक्षा हुन्छ, तन्त्र शास्त्रमा त्यही मन्त्र हो । मन्त्रको त्यही स्थान हुन्छ जुन शरीरमा प्राणको । आफ्नो इष्टलाई प्रकाशमा ल्याउने मन्त्र नै हो ।

'**तत्वमवबोधकत्व मंत्रम् ।**'

'**अल्पाक्षरत्व सति दिव्यार्थ बोधकत्वं**', कम अक्षर भएको र जसले दिव्य अर्थ दिन्छ, त्यही मन्त्र हो । देवता मन्त्रको अधीन रहन्छन्, '**मन्त्र परम लघु जासु वश विधि हरिहर सुर सर्व**' (तुलसीदास) मन्त्र दुई वर्ण मिलेर बनेको छ– म र त्र । मको अर्थ हो– मनन । त्र को अर्थ हुन्छ– त्राण । भनिएको पनि छ–

**मननं विश्व विज्ञानं त्राणं संसार बन्धनात् ।**
**यतः करोति संसिद्धिं मन्त्र इत्युच्यते ततः ॥**

(पिंगला मत)

**मननात् त्राणनात् चैव मदरूपस्यावबोधनात् ।**
**मन्त्र इत्युच्यते सम्यङ् मदधिष्ठानतः प्रिये ।**

(रुद्रयामल)

मन्त्र मननद्वारा नै भौतिकजगत्बाट जीवनको रक्षा गर्दछ, त्यसलाई मुक्त गर्दछ । जीवनको चतुर्वर्ग– धर्म, अर्थ, काम, मोक्षलाई आमन्त्रण गर्दछ ।

**मननात् तस्य रूपस्य वेदवस्यामिततेजसः ।**
**त्रायते सर्व भयतः तान् मन्त्र इतीरितः ॥**

अमित प्रभावशाली वेदको सार रूपको जसमा मनन गरिएको छ, जुन संसारमा आगामादिद्वारा सम्पूर्ण भयबाट रक्षा गर्छ, त्यसलाई मन्त्र भनिन्छ ।

मन्त्र शब्द '**मनु अवबोधने**' तथा '**त्रैङ पालने**' (रक्षा गर्नु) र '**मन्त्रिगुप्त परिभाषणे**' धातुहरूबाट बनेको छ । वेदमा यसको व्याख्या यसरी बताइएको छ– **वेद भेदः प्रनूनं ब्रह्मणस्पति मन्त्र वदत्युक्थम् ।** भासुरानन्दनाथ आफ्नो 'ललिता सहस्रनाम' भाष्यमा लेख्छन्– '**संसार क्षयकृन्त्राणधर्मण्यो मन्त्र उच्यते ।**' सांसारिक आवागमनादि भयहरूको नाश गरेर मन्त्रले भक्तको रक्षा गर्दछ । यसको अर्थ गुप्त रहस्य पनि हो । मन्त्रहरू वर्णहरूद्वारा बन्छन् । यसको स्वरूप विमर्श हो । पूजा र साधनामा प्रयुक्त हुने

रूपमा अर्चन गर्ने विधान हो । सबै प्रकारका देवीदेवता, दस महाविद्या इत्यादिले मनुष्यको आन्तरिक भावलाई स्पष्ट गर्दछ र यसको परिकल्पना गरेर इष्टरूपमा स्वीकार गर्नाले मनुष्यको मनमा अहंकारको उदय हुने डर क्षीण हुन्छ ।

तन्त्र साधनामा मन्त्रबिना सफलता प्राप्त हुन सक्दैन । मन्त्रको निर्माण वर्णको संगठनबाट हुन्छ । वर्णको अर्को नाम नै अक्षर हो । वर्ण मूलरूपमा एउटा ध्वनि हो र ध्वनिलाई आकाश तत्त्वयुक्त मानिन्छ । मन्त्र विभिन्न वर्णहरूबाट निर्मित हुन्छ र यसको निर्माणबाट जुन तरङ्गहरू बन्छन्, ती तरङ्गहरूको माध्यमबाट साधक एउटा विशेष अवस्थामा पुग्दछ । मन्त्रहरूको तरङ्गले साधकको भित्री चेतना केन्द्रहरूमा प्रभाव पार्दछ । ध्वनिहरूको अर्थात् मन्त्रको बारम्बारको पुनरावृत्ति अर्थात् जपबाट जुन परिणाम प्राप्त हुन्छ, त्यसबाट साधकभित्र एउटा अनुभूति जागृत हुन्छ । मन्त्रबाट पूरै व्यक्तित्वको रूपान्तरण सम्भव छ । संस्कारहरूको समापन पनि सम्भव छ । मन्त्रबाट चेतनाको परिष्कार हुन्छ किनकि यसै वैज्ञानिक प्रक्रियाका कारण तरङ्ग उत्पन्न हुने गर्दछ । अटुट तरङ्गहरूको प्रभावबाट साधकभित्र

मन्त्र ती विशिष्ट ध्वनिहरू हुन् जसले सम्बद्ध देवताको स्वरूपलाई व्यक्त गर्दछ । अमुक देवताको मन्त्र ती अक्षर वा अक्षरहरूको समूह हुन् जसले साधन शक्तिद्वारा अभिधेयलाई साधकको चेतनामा अवतीर्ण गर्दछ ।

मन्त्र शब्दात्मक छ र शब्द समस्त व्यवहारहरूको कारण मानिन्छ । यसको ब्रह्मसँग अभेद सम्बन्ध स्थापित गर्दै **'बाइबल'मा भनिएको छ– 'सृष्टिको आरम्भकालमा केवल शब्द थियो । त्यो परमात्मासँग थियो । त्यो स्वयं परमात्मा थियो ।'** 'कुलार्णव' तन्त्रमा मन्त्र, देवता र गुरु एकै मानिएको छ ।

**यथा देवस्तथा मन्त्रो यथा मन्त्रस्तथा गुरुः**
**देव मन्त्र गुरूणां च पूजया सदृशं फलम् ।**

देव, मन्त्र तथा गुरु एकै हुन् । यिनीहरूको पूजनबाट एउटै फल मिल्दछ । याज्ञिकहरूका अनुसार वाक् (वाणी) का चार भेद मानिएको पाइन्छ– मन्त्र, कल्प, ब्राह्मण र लौकिकी । मन्त्रका चार प्रकार बताइएको छ– वैदिक, पौराणिक, तान्त्रिक र साबर ।

वैदिक– क्रिया एवं भावना दुवै ।

पौराणिक– भावको प्रधानता, क्रिया गौण ।

तान्त्रिक– क्रियाको प्रमुखता ।

साबर मन्त्र– शक्तिको आह्वान ।

तान्त्रिक मन्त्रअन्तर्गत एकाउन्न वर्ण छन् । यिनमा समस्त वाङ्मय आउँछन् । यसैको परिलक्षित रूप एकाउन्न पीठ हुन् । मन्त्रहरूमा विशेष गरी निम्न ६ कुराहरूमाथि ध्यान दिइएको पाइन्छ–

छन्द– यसमा उच्चारणको रीति ज्ञात हुन्छ ।
ऋषि– मन्त्र तत्त्वका आविष्कर्ताको परिचय ।
देवता– इष्ट फल प्राप्त गराउने देवताको ज्ञान ।
बीज– मूल तत्त्वको संक्षिप्त रूप ।
कीलक– विरोधी शक्ति जसले साधकलाई साधनाबाट हटाउँछ, त्यसको निरोधका लागि ।
शक्ति– चैतन्य शक्तिको संचार ।

मन्त्र शास्त्रमा मन्त्रका तीन भेद बताइएको छ–

१. बीज मन्त्र
२. मन्त्र
३. माला मन्त्र

एउटा चक्र जागृत हुन्छ ।

प्रथम स्थितिमा साधकले वाचिक जप गर्दछ र यस्तो जप पढेर गरिन्छ । दोस्रो स्थितिमा जप मानसिक हुन्छ र तेस्रो उच्चतम अवस्थामा जप अनायास भइरहन्छ । जब अनायास जप हुन लाग्दछ तब मन्त्रको ध्वनि तरङ्ग सन्तुलित हुन जान्छ । मन्त्रानुसार प्रभाव दिन समर्थ हुन्छ ।

यसप्रकार मन्त्रहरू असङ्ख्य छन् । साधकको अवस्था, प्रयोजन एवं लक्ष्यअनुसार गुरुले बेग्लाबेग्लै मन्त्रको छनौट गर्नुहुन्छ । मन्त्र विशेष अवस्थामा पुगेर प्रभाव दिन समर्थ हुन्छ । यसलाई मन्त्र चैतन्यको अवस्था भनिन्छ । सम्यक प्रकारले मन्त्रको पुनरावृत्ति हुन्छ भने अर्थात् ठीक प्रकारले गरिन्छ भने मन्त्र सार्थकसिद्ध हुन्छ ।

तन्त्रविज्ञानका अनुसार '**जापात् सिद्धिः जपात् सिद्धिः जपात्सिद्धि र्न संशयः**' अर्थात् जपबाट सिद्धि प्राप्त हुन सक्छ । बिनाजप सिद्धि सम्भवै छैन । मन्त्र निश्चित समयसम्म जप गरिन्छ भने सिद्धि र साक्षात्कार सम्भव हुन्छ । तन्त्र विज्ञानमा मन्त्रलाई चैतन्य गर्नका लागि

यिनमा मन्त्र र माला मन्त्रको अर्थ त स्पष्ट हुन्छ । बीज मन्त्रले जपद्वारा आफ्नो अर्थ बताउँछ ।

बीज मन्त्र– यो विशिष्ट भाव प्रकट गर्नका लागि हुन्छ । मन्त्रयोग संहितामा ८ प्रकारका बीज मन्त्र बताइएको पाइन्छ–

**गुरु बीजं शक्ति बीजं रमा बीजं ततो भवेत् ।**
**काम बीजं योग बीजं तेजो बीजमथापरम् ।**
**शक्ति बीजं च रक्षां प्रोक्ता चैषां प्रधानता ॥**

गुरु बीजं– ऐं, शक्ति बीजं– क्रीं, रमा बीजं– श्रीं । काम बीजं– क्लीं, योग बीजं– क्रीं, तेजो बीजं– ह्रीं । शक्ति बीजं– स्त्रीं, रक्षा बीजं– ह्लीं ।

**क्रीं**

क–काली, र–ब्रह्मा, इकार–महामाया, अनुस्वार–दुःखहरण, अर्थ : ब्रह्मशक्ति सम्पन्न महामाया काली मेरो दुःखलाई हरण गर्नुहोस् ।

**श्रीं**

श–महालक्ष्मी, र–धन, ऐश्वर्य, ई–तुष्टि, अनुस्वार–दुःखहरण, अर्थ : धन, ऐश्वर्य, सम्पत्ति, तुष्टि-पुष्टिकी अधिष्ठात्री देवी लक्ष्मी मेरा दुःखहरूलाई नाश गर्नुहोस् ।

**ह्रौं**

ह–शिव, औ–सदाशिव, अनुस्वार–दुःखहरण, अर्थ : शिव तथा सदाशिव कृपा गरेर मेरो दुःख हर्नुहोस् ।

**दुं**

द–दुर्गा, उकार–रक्षा, अनुस्वार– गर्नु, अर्थ : माता दुर्गा मेरो रक्षा गर्नुहोस् ।

**ऐं**

ऐ–सरस्वती, अनुस्वार–दुःखहरण, अर्थ : हे माता सरस्वती मेरा दुःखहरूलाई अर्थात् अविद्यालाई नाश गर्नुहोस् ।

**क्लीं**

क–कृष्ण अथवा काम, ल–इन्द्र, ई–तुष्टिभाव, अनुस्वार–सुखदाता, अर्थ : कामदेव रूप श्रीकृष्ण मलाई सुख, सौभाग्य दिनुहोस् ।

**गं**

ग–गणेश, अनुस्वार– दुःखहर्ता, अर्थ : श्री गणेश मेरा विघ्न र दुःखहरूलाई हरण गर्नुहोस् ।

मन्त्रजपका विभिन्न उपायहरू पनि बताइएका छन्। मन्त्रका दोषहरूलाई दूर गर्न मन्त्र संस्कारको विधान पनि गरिएका छन् । मन्त्रजप एउटा सरलतम निश्चित तथा सर्वाधिक सुरक्षित साधन हो । जोसुकैले पनि जप गर्न सक्छ । यस साधनद्वारा जीवनमा भौतिक तथा आध्यात्मिक सफलता प्राप्त गर्न सक्छ । यसका लागि तीनवटा तत्त्व आवश्यक छन्– १. मनको एकाग्रता २. मन्त्रमा विश्वास ३. हृदयको शुद्धता। मन्त्रजपद्वारा नै व्यक्तिको भित्री अन्धकार तथा मैलो भाग्दछ, अन्त:करण शुद्ध हुन्छ र जुन इष्ट तथा शक्तिलाई बारम्बार उच्चारण गरिन्छ उसको विशेष गुणशक्ति दैदीप्यमान्स्वरूप हाम्रो मन:चक्षुसामु उपस्थित हुन लाग्छ। मन्त्रजपको नियम र त्यसको विधिको ज्ञान साधकलाई नभएसम्म मन्त्रजप सफल हुँदैन। यसकारण मन्त्रजपमा तीन प्रकारको स्वरूपलाई स्पष्ट गरिएको पाइन्छ–

१. वाचिक जप– मन्त्र जपको तात्पर्य हो– जब स्पष्ट उच्चारणका साथ ध्वनि सुनिन्छ भने त्यसलाई वाचिक जप भनिन्छ ।

२. उपांशु जप– यस क्रियामा मन्त्रजपमा केवल ओठ र जिब्रोद्वारा मन्त्रको उच्चारण स्पन्दन क्रिया गरिन्छ र ध्वनि बाहिर सुनिँदैन ।

३. मानस जप– यस क्रियामा मन्त्रको अर्थलाई बुझेर ज्ञानपूर्वक मनबाट मन्त्रजप चल्दै रहन्छ। यो उत्तम प्रकारको जप विधि हो ।

वाचिक जपभन्दा उपांशु जप श्रेष्ठ र उपांशुभन्दा मानस जप उत्तम मानिन्छ । केवल मन्त्रजपबाटै मनका चारैतिर फैलिएका शक्ति एकत्रित हुन्छन् । यसबाट मनमा समता प्राप्त हुन्छ। भगवान् श्रीकृष्णले गीतामा भन्नुभएको छ– '**समत्वं योग उच्यते**' मनको समता नै योग हो र यही समताले ध्यानको रूप लिन्छ। यसको परिणति समाधिरूपमा हुन्छ । अर्थात् मन नै धारणा, ध्यान एवं समाधिको स्वरूप हो । श्रीमद्भगवद्गीताको १८ औँ अध्यायमा भगवान् श्रीकृष्णले यसरी स्पष्ट भन्नुभएको छ– यज्ञहरूमा म जप यज्ञ हुँ तथा साधकलाई नाम जपद्वारा नै सिद्धि प्राप्त हुन सक्छ । जय गुरुदेव !

**हूं**

ह–शिव, ऊ–भैरव, अनुस्वार–दु:खहर्ता, अर्थ : असुर संहारक शिव एवं भैरव मेरा दु:खहरूलाई नाश गर्नुहोस् ।

**ग्लौं**

ग–गणेश, ल–व्यापक रूप, औ–तेज, अनुस्वार–दु:खहरण, अर्थ : व्यापकरूप विघ्नहर्ता गणेश आफ्नो तेजबाट मेरा दु:खहरूको नाश गर्नुहोस् ।

**स्त्रीं**

स–दुर्गा, त–तारण, र–मुक्ति, अर्थ : दुर्गा मुक्तिदाता, दु:खहर्ता, भवसागरतारिणी महामाया मेरा दु:खहरूको नाश गर्नुहोस् ।

**क्ष्रौं**

क्ष–नृसिंह, र–ब्रह्म, औ–ऊर्ध्वदन्त, अनुस्वार–दु:खहरण, अर्थ : ऊर्ध्वदन्त, ऊर्ध्वकेशी ब्रह्मस्वरूप नृसिंह भगवान् मेरा दु:खहरूलाई दूर गर्नुहोस् ।

**वं**

व–अमृत, अनुस्वार– दु:खहरण, अर्थ : हे अमृतस्वरूप सागर मेरा दु:खलाई दूर गर्नुहोस् ।

**ह्रीं**

ह–शिव, र–प्रकृति, ई–महामाया, अनुस्वार–दु:खहरण, अर्थ : शिवयुक्त विश्वमाता महामाया शक्ति मेरा दु:खहरूलाई नाश गर्नुहोस् ।

यी बीज मन्त्रहरू आफैमा मन्त्रस्वरूप छन्–

शं–शंकर बीज, फ्रौं– हनुमान बीज, क्रौं–काली बीज, दं–विष्णु बीज, हं–आकाश बीज, यं–अग्नि बीज, रं–जल बीज, लं–पृथ्वी बीज, शं–ज्ञान बीज, अं–भैरव बीज ।

यसप्रकार मन्त्र र बीज मन्त्रहरूको जप गर्नाले तान्त्रिक क्रिया सम्पन्न हुन्छ। तन्त्रका दस संस्कार छन् र त्यसको साथसाथै पुरश्चरणको विधान पनि आउँछ । प्रारम्भिक अवस्थामा निश्चित सङ्ख्यामा नियमित जप आवश्यक हुन्छ । मन्त्रजपबाट वाणीको सिद्धि र मनको शुद्धि हुन्छ जसबाट भित्रको हटेर ज्ञान र चेतना आफ्नो श्रेष्ठरूपमा साधकको व्यक्तित्वमा प्रकट हुन्छ। अत: प्रत्येक साधकले मन्त्रजप अवश्य नै गर्नुपर्दछ ।

जय गुरुदेव !

# सद्‌गुरु र तन्त्र विज्ञान

तन्त्र विवेचनाबाट यो स्पष्ट हुन्छ कि प्रत्येक व्यक्ति आफैमा तान्त्रिक हो । मन्त्र र यन्त्रका साथ साधना मार्गमा हिँडेको व्यक्तिलाई तान्त्रिक भनिन्छ । जो तन्त्रको योग लिएर साधना पथमा अग्रसर हुन्छ, उसलाई प्रारम्भिक अवस्थामा अरूको सहारा चाहिन्छ। जसले सहयोग, सहारा दिनुहुन्छ, उहाँ नै गुरु हुनुहुन्छ । गुरु र गुरु तत्त्वमा धेरै अन्तर छैन। गुरु भन्नाले कुनै शरीरधारी गुरुको बोध हुन्छ। गुरुले साधनाको सोपानलाई पार गर्नुभएको हुन्छ र उहाँमा यति धेरै सामर्थ्य हुन्छ कि आफ्ना शिष्यहरूलाई साधना क्रममा उत्तीर्ण गराउन समर्थ हुनुहुन्छ । तन्त्र शास्त्रमा भने गुरुलाई तत्त्वरूपमा लिइएको छ । वास्तवमा कुनै पनि शरीरधारी मनुष्य गुरु हुन सक्दैन, गुरु तत्त्वको प्रतीक मात्र हुन सक्छन् । गुरुको सम्बन्धमा जति पनि स्वरूप निर्धारणपरक श्लोक छन्, त्यसमा परम तत्त्वलाई नै गुरुरूपमा मानिएको छ ।

**अखण्डमण्डलाकारं व्याप्त येन चराचरं,**
**तत्पदं दर्शितंयेन तस्मै श्री गुरवे नमः ।**
**गुरुर्ब्रह्मा गुरुर्विष्णुः गुरुर्देवो महेश्वरः ।**
**गुरु साक्षात् परब्रह्म तस्मै श्री गुरवे नमः ॥**

समस्त चराचर जगत्‌मा अखण्ड, अनन्त र चैतन्यरूपमा व्याप्त त्यस परमतत्त्वको ज्ञान गराउनुहुने पूज्य गुरुदेवलाई बारम्बार नमस्कार छ ।

गुरु नै ब्रह्मा, विष्णु र शिवस्वरूप हुनुहुन्छ तथा साक्षात् ब्रह्मरूप हुनुहुन्छ । यस्ता गुरुलाई म बारम्बार नमन गर्दछु ।

गुरु परब्रह्म हुनुहुन्छ। त्यसैले तन्त्र शास्त्रमा गुरु, मन्त्र, तथा देवतामा अभेद मानिएको छ । गुरु शब्दको शाब्दिक अर्थमाथि विचार गर्दै बताइएको पाइन्छ–

**गकारः सिद्धिदः प्रोक्तो रेफः पापस्य दाहकः ।**
**उकारः शमभुरित्युक्तस्त्रिधात्मा गुरुरव्ययः ॥**

गुरु शब्दको अर्थ हो– गकार सिद्धि दिनुहुने, रेफ समस्त पापहरूलाई दहन गर्ने, उकार शिवको परिचायक हो । यसप्रकार तीनै शक्तिहरूबाट युक्त गुरु अविनाशी हुनुहुन्छ ।

यस अर्थबाट यो पनि ज्ञात हुन्छ कि गुरु शरीर सीमामा बाँधिनुहुन्न । उहाँ एक अखण्ड तत्त्व हुनुहुन्छ । तन्त्रमा मानिएको छ– गुरु हुन त शिवले मात्रै सक्नुहुन्छ । यसैले तन्त्रमा गुरुको जति प्रकारका ध्यान बताइएका छन्, ती मौलिकरूपमा शिवका नै ध्यान हुन् । एउटा महत्त्वपूर्ण ध्यान यसप्रकार छ–

**श्वेतं श्वेत विलेप्य माल्यवसनं वामेन रक्तोत्पलम् ।**
**विभृत्या प्रियेयेतरेण तरसालिष्टं प्रसन्नानम् ॥**
**हस्ताभ्यामभयं वरं च दधतं शम्भुस्वरूपं परम ।**
**हालालोहित लोचनोत्पलयुगं ध्यायेच्छिरस्यं गुरुम् ॥**

गौर वर्ण, श्वेत चन्दन लगाउनुभएको, श्वेत माला र वस्त्र लाउनुभएको, बायाँ भागमा रक्त कमलले सुशोभित आफ्नी प्रिया मायाशक्तिले युक्त, प्रसन्न मुख भएको, दुवै हातमा अभय तथा वरदान दिनुहुँदै शम्भुस्वरूप रक्तकमलसमान दुई नयनले युक्त आज्ञाचक्रमा विराजमान

गुरुको ध्यान गरौं ।

गुरुको जुन स्वरूप छ, वस्तुत: त्यो शिवको स्वरूप नै हो। स्पष्टरूपमा 'कुलार्णव'ले भन्दछ कि गुरु केवल शिव मात्र हुन सक्नुहुन्छ र उहाँ नै भुक्तिमुक्ति दिने हुनुहुन्छ। गुरु परमतत्त्व रूपमा हुनुहुन्छ र उहाँलाई केवल परज्ञानीले मात्र बुझ्न सक्छन्। त्यो परमतत्त्व साक्षात् शिवको रूपमा हुनुहुन्छ एवं जो प्रतीक गुरुमा हुन्छ, त्यसमा शिव भावना नै गर्नुपर्छ ।

**अतएव शिवः साक्षाद् गुरु रूपं समाश्रितः ।**
**भक्त्या सम्पूजितो देवि भुक्ति मुक्ति प्रयच्छति ॥**
**श्रीगुरुं परमं तत्त्व तिष्ठन्तं चक्षुरग्रतः ।**
**मन्दभाग्या न पश्यन्ति ह्यन्धाः सूर्यमिवोदितम् ॥**
**गुरुः सदाशिवः साक्षात् सत्यमेव न संशयः ॥**
**शिवएव गुरुर्नो चेद्भुक्तिं मुक्तिं ददाति कः ॥**
**सदाशिवस्य देवस्य श्रीगुरोरपि पार्वति ।**
**उभयोरन्तरं नास्ति यः करोति स पातकी ॥**

'यसैले गुरु नै शिवको साक्षात् स्वरूप हुनुहुन्छ। हे देवी पार्वती ! श्रद्धापूर्वक उनको पूजन गर्नाले भोग र मोक्षको प्राप्ति हुन्छ। परमतत्त्वस्वरूप गुरु सधैं आँखा सामु हुँदा पनि मन्द भाग्य व्यक्तिले उनलाई देख्न सक्दैन जसरी अन्धोले उदित भइरहेको सूर्यलाई देख्न सक्दैन । गुरु नै साक्षात् शिवरूप हुनुहुन्छ भन्ने कुरामा शंका छैन । यदि गुरु शिवस्वरूप हुनुहुन्न भने साधकलाई भोग र मोक्षको प्राप्ति कोबाट हुन्छ ? हे पार्वती ! सदाशिवस्वरूप गुरु र शिवमा कुनै अन्तर छैन। पापी व्यक्तिले नै दुईमा विभाजन गर्दछ ।'

तन्त्र साधनामा आज्ञा चक्रमाथि सहस्रारसमीप गुरु चक्र मानिएको छ र वर्णमय मणि सिंहासनमा उहाँको आसन छ अर्थात् उहाँ हरेक व्यक्तिभित्र अवस्थित हुनुहुन्छ र यस तत्त्वको जागरण भएपछि त्यसको निर्देश प्राप्त हुन लाग्दछ । गुरु तत्त्वरूपमा एउटा व्यापक र चैतन्यरूप हुनुहुन्छ एवं यसै दृष्टिले मन्त्र, देवता र गुरुमा कुनै भेद मानिएको पाइँदैन ।

गुरु तत्त्वको चिन्तनमा भावना सुदृढ भएपछि नै प्रतीक गुरु, जो शरीररूपमा हुनुहुन्छ, को उपयोगिता एवं उपयुक्तता बन्दछ । मनुष्य देहधारी हो । यसैले गुरु शरीररूपमा हुनु सुविधाजनक हुन्छ। तर यो सुविधा तबसम्म वास्तविकरूपमा प्राप्त हुँदैन जबसम्म उसले तत्त्वबोधले युक्त भएर प्रतीकमा पनि भावनालाई दृढ गर्दछ किनकि साधकका लागि प्रतीक आरम्भ हो र तत्त्व लक्ष्य हो। यसैले तन्त्रमा दुवैमा एकताको अनुभव गर्न भनिएको छ ।

देहधारी गुरुका लागि पनि तन्त्र शास्त्रमा लक्षण बताइएको छ। ती सारा लक्षणले यिनै कुरातिर संकेत गर्दछन् कि गुरु हुनमा उहाँ नै समर्थ हुनुहुन्छ जसलाई शिवबाट आरम्भ हुने परम्पराको माध्यमबाट मन्त्र प्राप्त भएको छ र जो साधना पथमा हिँड्नुभएको छ ।

लोकमा उहाँ सर्वथा सन्तुष्ट हुनुहुन्छ र शिष्यप्रति करुणाभावले युक्त भएर उसलाई परमतत्त्वको बोध गराउने इच्छा राख्नुहुन्छ । बाह्यरूपमा जति पनि गुरुको लक्षण बताइएको छ, ती आन्तरिक उपलब्धिहरूका प्रतीक मात्र हुन् । प्रत्यक्ष गुरुको सम्बन्धमा बताइएको छ कि उहाँ शान्त, क्षमाशील, विनीत एवं शुद्ध भेषवाला, शुद्धाचारले युक्त, पवित्र एवं प्रज्ञायुक्त, ध्याननिष्ठ र मन्त्र तन्त्रमा पारंगत हुनुपर्दछ । संसारसागरबाट निमग्नजनलाई तत्त्वरूपी नाउ प्रदान गरेर तार्नमा समर्थ हुनुपर्दछ, त्यस्तो व्यक्तित्व नै गुरु हुन सक्नुहुन्छ ।

**शान्तो दान्तः कुलीन श्चविनीतः शुद्धवेशवान् ।**
**शुद्धाचारः सुप्रतिष्ठः शुचिर्दक्षः सुबुद्धिमान् ॥**
**आश्रमी ध्याननिष्ठश्च मंत्र तन्त्र विशारदः ।**
**निग्रहानुग्रहे शक्तो गुरुरित्यभिधीयते ॥**
**संसार सागरे मग्नान् यस्तायति देहिनः ॥**
**तत्वप्लवप्रदानेन स एव हि गुरुः स्मृतः ॥**

यसका अतिरिक्त प्राय: सबै तन्त्र ग्रन्थहरूमा गुरुको लक्षण बताइएको पाइन्छ जुन यसै मूल विन्दुको सेरोफेरोमा भएको पाइन्छ । तर तन्त्र साधनामा गुरुको जुन तत्त्वरूप बताइएको छ, त्यो सर्वोपरि छ ।

तन्त्र विज्ञानले गुरुको महत्त्वमाथि विशेष बल दिन्छ किनकि प्रत्येक दृष्टिले गुरुले नै शिष्यलाई दीक्षा प्रदान गर्नुहुन्छ र दीक्षापछि मन्त्र प्रदान गर्नुहुन्छ । दीक्षाको माध्यमले नै साधनाको क्रम प्रारम्भ हुन्छ र विकसित पनि हुन्छ। दीक्षाका साथमा शक्तिपात पनि जोडिएको हुन्छ एवं शक्तिपातको तीब्रता शिष्यको अवस्थाअनुसार हुन्छ ।

दीक्षाको मूल रहस्य यो हो कि गुरुले शक्तिपातको माध्यमबाट शिष्यमा तेजस तत्त्व भर्नुहुन्छ जसले कालान्तरमा ऊ भित्रको मललाई शोधन गरेर आत्मामा जमेको आवरणलाई समुच्छेदित गरेर आलोकित गर्छ । यसै तत्त्वले साधकलाई साधनाको उचाईसम्म पुर्‍याउँछ तथा चेतनाका विविध भूमिबाट पार गर्दै मोक्षको अधिकारी बनाउँछ । दीक्षापछि साधना आरम्भ हुन्छ । जो साधक आफ्नो साधनामा जति अभ्यस्त हुन्छ त्यति नै माथिसम्म पुग्न सक्दछ। जय गुरुदेव !

# तन्त्रविद्या

अधिकांश जनमानसहरू तन्त्रको उच्चारण हुँदा मारण, वशीकरण, भूतप्रेतादि निकृष्ट सिद्धि प्राप्तिद्वारा समाजलाई कष्ट दिने विद्या मान्छन् । झारफुकबाट रोग निदान गर्ने, प्रेतादि ग्रहबाट मुक्ति दिलाउने, रसायनादि चमत्कारबाट भ्रमित गर्ने चतुर ऐन्द्रजालिक व्यक्तित्वको रूपमा तान्त्रिकको दिग्भ्रमित मान्यता रहिआएको छ। केहीले उदारता देखाई तन्त्रमा षट्कर्मका अतिरिक्त लोकोपकारी विद्याको भाव राख्छन् । एउटा अर्को बौद्धिक चिन्तक मान्यताले तन्त्रलाई आत्ममार्यणको रूपमा स्वीकार गर्छ । यस्ता साधकहरूको दृष्टिमा तन्त्र भुक्तिको मार्ग मात्र नभई मुक्ति प्रदाता मार्ग समेत हो ।

तनादिगणपठित तुन धातुदेखि उणादि 'ष्ट्रन्' प्रत्यय गर्दा तन्त्र शब्द बन्दछ। यसको सामान्य अर्थ फैलावट हो। त्यसैले तन्त्र शास्त्रमा आफ्नो इष्टदेवीको विषयमा पूजा, पाठ, मन्त्र, न्यास, ध्यान, पुरश्चरण आदिको विस्तृत विवरण पाइन्छ । तन्त्र भन्नाले सामान्य जनमानसमा जादु, टुना, झारफुक, मारण, मोहन, वशीकरण, स्तम्भन, उच्चाटन, लागू, छोड आदिको बोध हुन्छ । कसैकसैले त यसलाई वेदविरुद्ध, पञ्चमकारको प्रयोग गर्ने र अश्लील कर्ममा आधारित भनेर पूरै तन्त्रलाई नै निन्दा गर्दछन् तर तन्त्र शास्त्रको वास्तविक विषय उच्च छ, आदर्शमय छ र नियमबद्ध छ। पूज्य गुरुको निर्देशनमा उपासना गर्दा षट्चक्र भेदन गरी स्वयं शिवमय बन्ने विधिको रूपमा शास्त्रमा वर्णित छ। सच्चा साधकको लागि त भोग र मोक्ष दुवै वस्तु दुई हातका लड्डु हुन्। त्यसैले शास्त्रमा भनिएको छ 'भोगश्च मोक्षश्च करस्थ एव'। सच्चा हृदयले भक्तिपूर्वक इष्टदेवीको उपासना गर्ने साधकका सामु वाक्य सिद्धि हुनु, स्वतः सांसारिक सुखभोगका साधन प्राप्त हुनु, शरीरबाट सुगन्ध निस्कनु, अष्टसिद्धि प्राप्त हुनु आदि त साधारण विषय मात्र हुन् । यस्ता सुखभोगका कुराहरू मोक्षमार्गका लागि भने बाधक नै हुन् । सच्चा तान्त्रिकका लागि यी तुच्छ कुरा हुन् । उसको उद्देश्य परम पद प्राप्त गरी शिवमय बन्नु हो ।

जुन शास्त्रमा १. सृष्टिप्रकरण, २. प्रलय प्रकरण, ३. तन्त्रनिर्णय, ४. दैवी सृष्टिको विस्तार, ५. तीर्थवर्णन, ६. ब्रह्मचर्यादि आश्रमधर्म, ७. ब्राह्मणादिवर्णधर्म, ८. जीव सृष्टिको विस्तार, ९. यन्त्र निर्णय, ११. देवताहरूको उत्पत्ति, ११. औषधिकल्प, १२. ग्रहनक्षत्रादि संस्थान, १३. पुराणाख्यान, १४. कोष कथन, १५. व्रत ६. शौचाशौच निर्णय, १७. नरकवर्णन, १८. आकाशादि पञ्चतत्त्वको अधिकार अनुसार पञ्चसगुणोपासना, १९. स्थूल ध्यान आदि भेदले चार प्रकारका ब्रह्मका ध्यान, २०. धारणा, मन्त्र योग, हठ योग, लय योग, राजयोग, परमात्मा परमेश्वरका सबै प्रकारको उपासना विधि, २१. सप्तदर्शनशास्त्रहरूका सात ज्ञानका रहस्य, २२. अध्यात्म आदि तीन प्रकारका भावहरूको लक्ष्य, २३. तन्त्र र पुराणहरूका विविध भाषाहरूको रहस्य, २४. वेदको षडङ्ग, २५. चारै वेद, प्रेत तत्त्व २६. रसायनशास्त्र, रसायन सिद्धि, २७. जपसिद्धि, २८. श्रेष्ठ तपसिद्धि, २९. दैवी जगत्सम्बन्धी रहस्य, ३१. सकलदेवपूजित शक्तिको वर्णन, ३१. षट्चक्रकथन, ३२. स्त्रीपुरुषलक्षण वर्णन, ३३. राजधर्म, दानधर्म, युगधर्म, ३४. व्यवहाररीति, ३५. आत्मा अनात्माको निर्णय इत्यादि लक्षणहरूको सन्दर्भमा वर्णन गरिएको हुन्छ। यसलाई तन्त्रशास्त्र भनिने ऋषिहरूको मत रहेको छ ।

धेरै तन्त्रप्रणेताहरूको मन्यव्यले तन्त्रलाई श्री सदाशिवोक्त तन्त्र, पार्वतीकथित तन्त्र र ऋषिगणप्रणीत तन्त्र (आगम, निगम र आर्ष) गरी तीन भागमा विभक्त गर्न सकिन्छ । इच्छित तत्त्व अधीनका लागि देवताहरूको स्वरूप, गुण कर्मादिको चिन्तन प्रक्रियामा प्रकाश पार्दै पटल, कवच, सहस्त्रनाम तथा स्तोत्रसहित पञ्च अङ्ग पूजा-आचार विधिको मार्ग निर्देशन गरिएको हुन्छ ।

(क) पटल (देवताको महत्त्व, शीघ्र कार्यसिद्धि गर्न जप, होमादिका आवश्यक सामग्री र शापोद्धार मन्त्रसमेत निर्देशित) (ख) पद्धति (साधनाको शास्त्रीय विधि निर्देश गर्दै प्रातः स्नान, पूजा, जप मन्त्रादि र विनियोगादिको सम्पूर्ण वर्णन तथा नित्य र नैमित्तिक दुवै प्रकारका पूजाको विधान, काम्य प्रयोगको सरल जानकारी) (ग) कवच (उपासनाका देवता आफ्नै शरीरमा निवास गराई रक्षाको प्रार्थना गरिने, न्यास र पाठद्वारा कवच सिद्ध साधकको झारफूकबाट कुनै

पनि रोगीको रोग शान्त हुन्छ । कवच पाठ जपपछि मात्र गरिन्छ । भोजपत्र लेखन, जल अभिमन्त्रित, तिलकका साथै अन्य धारण वस्तुहरू अभिमन्त्रित गरिने) (घ) सहस्त्रनाम (विविध पूजाहरूमा स्वतन्त्र पाठ तथा हवनकार्यमा प्रयुक्त हुने उपास्य देवको अति रहस्यपूर्ण गुण कर्म आख्यानित तथा सिद्ध मन्त्रमय संकलित हजार नाम) (ङ) स्तोत्र (आराध्यदेवका गुणगान, प्रार्थना संग्रहित स्तुति । सिद्ध स्तोत्रमा मन्त्र विधि (स्वर्णादि बनाउने, यन्त्र बनाउने) प्रयोग (औषधि आदि) गुप्त संकेतबाट बताइएको हुन्छ ।) यी पाँच अंगहरूले पूर्ण शास्त्र नै तन्त्रशास्त्र हो भन्ने मान्यता छ ।

तन्त्रशास्त्रमा मुख्य आराध्यादेवी दश मानिन्छन् । यिनलाई दश महाविद्या भनिन्छ। दक्षप्रजापतिको यज्ञमा हठात् जान लागेकी सतीदेवीलाई शिवजीले रोक्न खोज्नुभयो । त्यो समयमा शङ्करदेखि दश दिशाबाट उम्कन खोज्ने सतीदेवीको अवतार मानिएका दश देवी नै दश महाविद्या हुन् । दश महाविद्या भन्नाले १.काली २. तारा ३. षोडशी (त्रिपुरसुन्दरी) ४. भुवनेश्वरी ५. छिन्नमस्ता ६. भैरवी (त्रिपुर भैरवी) ७. धूमावती ८. बगलामुखी ९. मातङ्गी ११. कमला (लक्ष्मी) यी दश भगवतीलाई बुझिन्छ । यी भगवतीका १. महाकाल २. अक्षोभ्य ३. पञ्चवक्त्र शिव ४. त्र्यम्बक ५. कबन्ध ६. दक्षिणामूर्ति (कालभैरव) ७. एकवक्त्र ८. महारुद्र ९. मतङ्ग ११. सदाशिव (विष्णु) यी पुरुषहरू हुन् । यी महाविद्याका आ-आफ्नै मन्त्र, पूजापद्धति, ध्यान, न्यास, स्तोत्र, पुरश्चरणहरू छन् । यी सबै भगवतीहरू नाम, रूप र कार्यका कारण भिन्दाभिन्दै देखिए पनि आखिरमा परब्रह्मस्वरूपा भगवती भने एक नै छिन् । यी परब्रह्मस्वरूपा भगवती कहिले नवर्दुगा, कहिले दश महाविद्या, कहिले अष्टमातृका बनेर लीला गर्दछिन्, त्यसैले सप्तशती (चण्डी) मा भनिएको छ 'एकैवाहं जगत्यत्र द्वितीया का ममापरा ।'

तन्त्रविद्यामा शिवशक्ति वा भैरव भैरवीको क्रीडास्थलका रूपमा नेपालमा ५१ भैरव र भैरवीको बास रहेको विश्वास गरिन्छ । थोमस एटेरकिन्सनको मतमा त नेपाल ५१ हजार भैरवभैरवीको पीठ हो । यस अर्थमा नेपालमा एक लाख दुई हजार शक्ति पीठहरू विद्यमान छन् तर डी.सी. सरकारले कुब्जिका तन्त्र, तन्त्र चूडामणि, वृहन्नीलतन्त्र, पीठ निर्णय (महापीठ निरूपण) आदि प्राचीन तन्त्रशास्त्रका आधारमा नेपाललाई शाक्त उपासनाको केन्द्र मानेको छ । त्यस्तै, देवी भागवतले नेपाललाई 'गुह्यकाल्या महास्थानं नेपाले

यत् प्रतिष्ठितम्' भनेर शक्तितीर्थ महान् स्थल मानेको छ । हरेक शक्तिको सगुण र निर्गुण उपासना हुन्छ । गुह्यकाली यसको अपवाद होइन । पाशुपत क्षेत्रमा अवस्थित यसपीठलाई उत्तराम्नायकी नायिका मानिन्छ । अथर्ववेदका छ शाखाहरू यथा: तारतन्तवी, मौज्जायनी, तार्णवैन्दवी शौनकी, पैपालादिका, सौमन्तकको उल्लेख गुह्योपनिषद्ले गर्दै गुह्येश्वरीको वासस्थललाई "शाक्ततीर्थ' मानेको छ । महाकालसंहिताको कालीखण्डमा गुह्यकालीको १८ मन्त्र र १८ विग्रहको उल्लेख पाइन्छ । यसको विभेद मूर्ति तथा चित्रकलामा एघार प्रकारबाट क्रमश: एक, दुई, तीन, पाँच, दस, बीस, एक्काइस, छत्तीस, साठी, अस्सी र सय टाउका भएको गुह्यकालीको चित्रमा महांकाल संहितामा छ ।

नेपालमा शिवशक्तिका एकात्म्यलाई तन्त्र तथा पुराणहरूमा प्रतीक तथा मूर्तरूपले विवेचना गरेको पाइन्छ। यसअनुसार गुह्येश्वरी मध्यकालदेखि दिव्येश्वरीका रूपमा भक्तपुर लोकन्थली, काठमाडौं न्युरोडमा विशालबजारको महालक्ष्मी मन्दिर परिसरको उत्तरपश्चिम कुनामा पनि स्थापना गरिएको छ। गुह्येश्वरी स्कन्दपुराणको केदारखण्डमा वर्णन गरिएझैं सतीदेवीको गुह्यस्थलको पतनबाट सिद्ध भएको पीठ मान्ने प्रथा रहे पनि तन्त्र परम्परामा आदिम गुह्यक नामक जातिले पूजा गर्ने देवी हुनाले यिनलाई गुह्येश्वरी' भन्ने गरेको अर्को मत पनि छ । त्यस्तै यो तन्त्रले मूलाधार चक्र संरक्षिका भइदिनाले यिनलाई गुह्येश्वरी भनिएको र गुह्या शक्तिका नामले चिनिने स्त्री, पुरुष र नपुंसकसमेतबाट वन्दनीय काली स्वरूपमा यिनलाई गुह्यकाली समेत भनिन्छ। तसर्थ, दसमहाविद्या परम्परामा यिनको नाम सर्वप्रथम आउँछ, यथा: काली, तारा, षोडषी, भुवनेश्वरी, भैरवी, छिन्नमस्ता, धूमावती, बगलामुखी, मातङ्गी र कमला ।

मध्यकालीन नेपालले प्राचीन लिच्छविकालको षष्ठी देवकुल, मातृका गण यथावत् रहेको पाइन्छ । मातृका, सप्तमातृकाको भावलाई उछिनेर कान्तिपुरमा अष्टमातृका, भक्तपुरमा नवदुर्गा तथा पाटनमा दसमहाविद्याका शक्तिपीठ, तत्कालीन शक्ति केन्द्रका रूपमा तुलजाभवानीको केन्द्रस्थललाई मध्यमा मानेर आरक्षित गरिएको नगरवास्तु तन्त्र परम्परा अपनाएको छ ।

हरेक मानिसको शरीरभित्र तीन नाडीहरू एवं सातवटा चक्रको सूक्ष्म तन्त्र हुन्छ । यी चक्रहरूले हाम्रो जीवनको सबै पक्षको नियन्त्रण गर्दछन् । तलका चक्रहरूले मूल जैविक गतिविधिहरू तथा माथिका चक्रले हृदय एवं मस्तिष्कको साथै सहस्रार एवं त्यो भन्दा पनि माथि घटित हुने आध्यात्मिक अवस्थाको नियन्त्रण गर्दछन् । बायाँ हृदयभित्र विद्यमान आत्मा (चेतना) हाम्रो सार तत्व हो । तर यसको ज्ञान प्राप्त गर्नको लागि बाहिरी विचार प्रवाहलाई रोकेर सत्यको साक्षी हुनको लागि अन्तर्मुखी हुनु आवश्यक छ ।

एकदम नै सुन्दर व्यवस्था गरिएको छ ताकि ठीक समयमा पावन अस्थिमा विद्यमान सुप्त पावन आध्यात्मिक ऊर्जा कुण्डलिनी हुन सकून् । कुण्डलिनी जब जागृत हुन्छ तब त्यसले चित्तलाई भित्र तान्दछ र स्वत: नै हाम्रा विचारहरू शान्त हुन थाल्दछन् तथा हामी यस्तो अवस्थामा पुग्छौं जसलाई निर्विचार समाधि भनिन्छ । यो नै आत्मसाक्षात्कारको पहिलो अवस्था हो ।

सहजयोगको एक अर्को लाभ हामीभित्र चैतन्य चेतना विकसित हुनु हो जुन आफूभित्रको सूक्ष्म शरीरको अवस्था बुझ्न सक्ने योग्यता हो । त्यसअनुरूप चक्रको स्थितिलाई आफ्नो हातमा महसुस गर्न सकिन्छ ।

हातको कुनै पनि औंलामा घोचेको जस्तो या दु:खेको जस्तो भएमा त्यस चक्रमा बाधा रहेछ भन्ने संकेत प्राप्त हुन्छ । बायाँ हातमा बायाँ नाडीतन्त्र दायाँ हातमा दायाँ नाडीतन्त्र तथा दुवै हातमा यस प्रकारको अनुभूतिले मध्य नाडीतन्त्रका बाधाहरूको अनुभव गर्दछ । औंलाको टुप्पामा तथा हातको हत्केलामा शीतल हावाको प्रवाहले यस तथ्यलाई दर्शाउँछ कि परमेश्वरी चैतन्य लहरीहरू अबोधरूपमा बहिरहेका छन् ।

**तीन नाडीहरू**

**१. इडा नाडी (बायाँ नाडीतन्त्र)**

बायाँ पक्ष यदि स्वस्थ भएमा हामी भावनात्मकरूपमा

सन्तुलित हुन्छौं । बायाँ पक्षमा बाधा भएमा हामी अल्छी, स्वयंलाई धिक्कार्ने तथा अरूको प्रभुत्व सामु झुक्ने बन्छौं । यस बाधालाई ठीक गर्नको लागि पृथ्वी र अग्नि तत्त्वको उपयोग गर्न सकिन्छ ।

**२. पिंगला नाडी (दायाँ नाडीतन्त्र)**

हाम्रो दायाँ नाडीतन्त्रले हामीलाई संचालन सृजनात्मकता तथा कार्यहरूलाई पूर्ण गर्ने योग्यता प्रदान गर्दछ । हामी यदि दायाँतर्फ अधिक गयौं भने आक्रामक भयौं भने हामी नीरस हुन्छौं, आलोचना गर्छौं र धाक जमाउँछौं । जल तत्त्वले दायाँ पक्षको अतिशय गर्मीलाई शान्त गर्दछ ।

**३. सुषुम्ना नाडी (मध्य नाडीतन्त्र)**

मध्य नाडीतन्त्रमा स्थित भएपछि हामी सन्तुलित हुन्छौं र उत्क्रान्तिको योग्य हुन्छौं । नियमित ध्यान धारणाले हाम्रो मध्य नाडीतन्त्रलाई सुदृढ गर्दछ तथा हामी शान्त एवं मधुर बन्दछौं । जय गुरुदेव !

*सन्दर्भ ग्रन्थ:*

*नेपालमा शक्ति पीठको आराधना –डा. मिलनरत्न शाक्य, तन्त्र परिचय, मन्त्र, महाविद्या, तन्त्र सिन्धु – कुँअर नरेन्द्र सिंह*

# तन्त्र सिद्धि र पञ्चमकार

तन्त्र साधनाका मूल जनक भगवान् शिवलाई मानिन्छ। उहाँले नै आगम शास्त्रको रचना गर्नुभयो । आगम शास्त्रमा तन्त्र साधनाहरूको विवरण पाइन्छ भने निगम शास्त्र वेद पुराणदिलाई मानिन्छ । कलियुगमा शक्ति साधनाको आवश्यकता अझ धेरै छ। यसैले तन्त्र साधनाका सिद्धान्तहरू पूर्णरूपले बुझ्नु आवश्यक छ ।

वेदादि शास्त्रमा वैदिक मार्गद्वारा जीवनको पूर्णताका लागि मोक्षको मार्ग बताइएको छ जसमा लौकिक वस्तुहरूको क्रमशः त्याग आवश्यक हुन्छ । तर आगम शास्त्रमा प्रेय (भोग) र श्रेय (मोक्ष) दुवैलाई एकैसाथ प्राप्त गर्ने सुगम मार्ग बताइएको छ । यसैले आगम शास्त्रलाई तन्त्र शास्त्र अथवा शक्ति शास्त्र पनि भनिएको हो ।

**'तन्यते विस्तार्यते ज्ञानमनेन इति तन्त्रम्'** अर्थात् जसको आधारबाट ज्ञानको विस्तार गरिन्छ त्यसलाई तन्त्र भनिन्छ। शैव सिद्धान्तअनुसार जसले तत्त्व एवं मन्त्रको समन्वित विविध विषयको सविस्तार वर्णन गर्दछ, त्यसलाई तन्त्र भनिन्छ । तन्त्र र वेद दुवैको चरम लक्ष्य जीवनमा पूर्णता प्राप्त गर्नु हो । यस दृष्टिले दुवैमा कुनै भिन्नता छैन ।

तन्त्र मूलरूपमा शाक्त उपासनाको स्वरूप हो र तन्त्रको उपयोग कुशलतापूर्वक गरिनुपर्दछ। तन्त्र मतानुसार यसको शिक्षा-दीक्षा गुरुमुखबाट प्राप्त हुन्छ । तब मात्र व्यक्ति श्रेष्ठ तान्त्रिक बन्न सक्दछ । तन्त्र एउटा छुरीजस्तै हो जुन डाक्टरको हातमा परे सदुपयोग भएर मानिसको प्राण बचाउन सकिन्छ, यदि डाँकाको हातमा पऱ्यो भने यसको दुरूपयोगबाट मानिसको प्राण समेत जान सक्छ । यसमा छुरीको दोष केही हुँदैन। छुरीको उपयोग कुन रूपमा गरिन्छ, त्यो महत्त्वपूर्ण कुरा हो। तर तन्त्रको दुरूपयोग गर्ने व्यक्तिले एकदिन भयानक सजायको भागी हुनुपर्ने हुन्छ ।

शक्तिबिना कुनै पुरुषार्थ पनि सफल हुँदैन । प्रत्येक अणु परमाणुमा देवप्रदत्त शक्ति छ, त्यही शक्तिले वस्तुलाई संचालन गर्दछ। अग्निमा उष्णता, प्रकाश र दहनशक्ति हुन्छ, त्यही नै त्यसको धर्म हो । यदि अग्निमा उष्णता, प्रकाश एवं दहनशक्ति नहुने हो भने त्यसको महत्त्व हुँदैनथ्यो। अतः तन्त्रको माध्यमबाट शक्तिको उपासना आवश्यक छ । यो उपासना बहिर्मुखी पनि हुन सक्छ र अन्तर्मुखी पनि। मूलतः तन्त्र साधना आत्मशक्ति जाग्रत गर्ने क्रिया हो ।

तान्त्रोक्त साधनाहरूमा देवीलाई शक्तिको प्रधान मानिन्छ र देवीको विभिन्न स्वरूपहरूलाई सिद्ध गरिन्छ ।

**शिवः शक्त्या युक्तो यदि भवति शक्तः प्रभवितुं,**
**न चेदेवं देवो न खलु कुशलः स्पन्दितुमपि,**
**आतस्त्वामाराध्यां हरिहरविरञ्चदिभिरपि**
**प्रणन्तुं स्तोतुं वा कथमकृतपुण्यः प्रभवति ॥**

(सौन्दर्यलहरी)

शिव शक्तिबाट युक्त भएर नै सृजन, पालन एवं संहारमा समर्थ हुनुहुन्छ । यदि उहाँ शक्तिरहित भएको भए स्पन्दन पनि गर्न सक्नुहुन्नथ्यो। यसैले सारा देवताहरू शक्तियुक्त भएकाले नै उपास्य छन्। तन्त्र साधनामा समयको अन्तरालसँगै भेद उत्पन्न हुँदै गयो। यसैको एक स्वरूपलाई उपासना भनियो जसमा भक्ति मार्गबाट शक्तिको उपासना गरिन्छ। मन्त्र क्रियाद्वारा शक्तिलाई साक्षात् सिद्ध गरिन्छ। यो दोस्रो प्रक्रिया हो र यसलाई वाममार्ग तन्त्र साधना भनेर चिनिन थालियो ।

वाममार्गका अनुसार शक्ति तन्त्रको माध्यमबाट काली, दुर्गा, चण्डिकाको तीव्र साधना आवश्यक हुन्छ। कालान्तरमा शिवलाई मूल आधार मानेर शिवको शुक्ल वर्णअनुरूप उमा, गौरी, सरस्वती, लक्ष्मीजस्ता गोरो रङका शक्तिहरू पूजित भए तथा शिवको कालरूपको कारण जो कृष्णवर्ण हुनुहुन्छ, काली, चण्डी, दुर्गा, चामुण्डा, कृष्णा आदिको साधना हुन थाल्यो ।

तन्त्र साधनामा मन्त्र शुद्धि द्रव्य, वाहव्य, स्थानलाई दृष्टिगत राखेर सक्षम गुरुबाट शाक्त दीक्षा ग्रहण गरेर गुरु, देवी (शक्ति) एवं मन्त्रमा एकात्मभाव राख्दै बीज, कवच, न्यास, मुद्रा, मातृका पूजनलाई विशेषरूपले सम्पन्न गरिन्छन् ।

शक्तिको तीव्रतम् स्वरूप कालीको साधनामा शव साधना, पञ्चमुण्ड साधना एवं बलीको स्वरूप अवश्य नै छ तर यस साधनालाई सात्त्विक रूपले नै गर्न सकिन्छ किनकि कुनै पनि साधना अमानवीय हुँदा शास्त्रसम्मत हुँदैन, न त यो सिद्ध हुन नै सक्छ ।

तन्त्र साधनामा प्रमुखरूपमा षोडश कुलदेवीहरूको

विशेष पूजन मानिएको छ जसमा वैष्णवी, ब्रह्माणी, कातिके, इन्द्राणी, यमी, वाराही, ईशानी, नारसिंही, चामुण्डा, वारुणी, कालापी, कुरुकुलिया, नारायणी, कौमारी, पराजिता एवं अपराजिता विशेष छन् ।

तन्त्रका अष्टनायिकाहरूको उपासना पनि विशेषरूपमा गरिन्छ, यी हुन्– बालिनी, कामेश्वरी, विमला, अरूणा, मेदिनी, जयन्ती, सर्वेश्वरी, कोलेशी ।

तन्त्र साधनाको नाम लिनासाथ वाममार्ग सिद्धान्तअनुसार पञ्चमकारलाई विशेष प्रधानता दिइन्छ । सामान्यरूपमा यो मानिएको पाइन्छ– तन्त्र साधना पञ्चमकारबिना सम्पन्न हुनै सक्तैन ।

कुलार्णव तन्त्रमा पनि लेखिएको छ–

**मद्यं मांसं च मीनं च मुद्रा मैथुनमेव च ।**
**मकारापंचकं प्रादुर्योगिनां मुक्तिदायकं ॥**

अर्थात् मद्य, मांस, मीन, मुद्रा र मैथुन यी पाँच मकारले योगीहरूलाई पूर्ण सिद्धि र मुक्ति प्रदान गर्दछन् ।

यहीँ आएर तन्त्रको स्वरूपको व्याख्या गलत भएको छ । वास्तवमा यी सबै वस्तुहरूको मूल शाब्दिक अर्थबाट होइन कि यिनलाई तात्त्विक स्वरूपबाट हेरिनुपर्दछ ।

योगिनी तन्त्रमा पञ्चमकारका सम्बन्धमा उल्लेख गरिएको छ । **मद्य (मदिरा) को सम्बन्धमा त्यसमा लेखिएको छ–** जुन सहस्राररूपी पात्रमा भरिएको होस् र चन्द्रमाको कला तत्त्वबाट स्रावित होस्, त्यो नै पिउन योग्य सुरा हो । यो पिउनाले अशुभ कर्मको प्रवाह नष्ट हुन जान्छ र साधकले परमतत्त्वको ज्ञान प्राप्त गरेर मुक्ति प्राप्त गर्दछ । यस्तो व्यक्ति नै योगी, मुनि बन्न सक्दछन् । अतः सुराको तात्पर्य सामान्य मदिरा होइन, शक्तिको अमृततत्त्व हो जुन कुण्डलिनीमा सहस्रारबाट सिंचित हुन्छ ।

**मांसको सम्बन्धमा लेखिएको छ–** 'मा' शब्द सम्पूर्ण प्रकारका रसप्रिय वस्तुहरूको स्वरूप हो र जुन साधकले यी सम्पूर्णको बलि दिएर अर्थात् त्याग गरेर हवन गर्दछन् र यसमा संयमता अपनाउँछन्, उनैले आफ्नो साधनारूपी खड्गबाट यस्तो बलि दिएर पूर्णता प्राप्त गर्न सक्दछन्, उनै मांसाहारी हुन् ।

आज पनि श्रेष्ठ यज्ञहरूमा देवी पूजनमा पशुको नभई नरिवलको हवन गरिन्छ अथवा नरिवलको बलि दिइन्छ ।

**मीन अर्थात् माछाको तात्पर्य हो–** तान्त्रिक क्रिया सम्पन्न गर्ने बेलामा अहंकार, दम्भ, मद, पशुता, मत्सर, द्वेष शरीरमा विचरण गर्ने छ प्रकारका माछा (दोषहरू) लाई नष्ट गरेर आफूलाई शुद्ध, पवित्र बनाएर गर्दछौँ भने हामी तान्त्रिक बन्छौँ । यदि माछा खाएर तान्त्रिक बनिने भए त आधाभन्दा बढी देशका मानिसहरू उहिल्यै तान्त्रिक भइसक्थे ।

**मुद्राको तात्पर्य हो–** आन्तरिक भाव प्रकट गर्नु । मुद्राद्वारा साधकले आठ प्रकारका कष्टदायक मुद्राहरू (भावहरू)– आशा, तृष्णा, जुगुप्सा, भय, घृणा, घमण्ड, लज्जा, क्रोधलाई त्यागेर आफ्नो शरीर तत्त्वलाई यति माथि उठाउँछ कि ऊ आफ्नो इच्छाअनुसार जे गर्न पनि समर्थ हुन्छ र उसलाई सिद्धि प्राप्त हुन्छ ।

**मैथुनको तात्पर्य हो–** मिलन या सम्भोग । तर यहाँ नर र नारीको सम्भोग भनिएको होइन । स्त्रीको तात्पर्य कुण्डलिनी शक्ति हो जुन हाम्रो शरीरभित्र स्थित छ जसको स्थान मूलाधार चक्र हो । सहस्रार शिवको स्थान हो । कुण्डलिनी जागरण गरी मूलाधारमा स्थित शक्तिलाई ऊर्ध्वमुखी गराएर सहस्रारमा स्थित शिवसँग मिलन गराउनु नै मैथुन हो ।

तन्त्र शास्त्रमा भ्रान्ति सृजना गर्ने अज्ञानीहरूले पञ्चमकारको अर्थ आफ्नो इच्छानुसार निकालेर गलत प्रयोग गरेकाले नै आज तन्त्रलाई हेयदृष्टिबाट हेरिन्छ जबकि मूलरूपले त सिद्धि प्राप्त गर्ने विशिष्ट प्रक्रिया हो तन्त्र ।

तन्त्र साधनामा शक्तिलाई दैवीस्वरूपको अविनाशी तत्त्व मानिएको छ । यसलाई वेदमा ॐकार अर्द्धमात्रा तथा गायत्रीमा प्रणव मानिन्छ । तन्त्र साधना केवल साधन, ऐश्वर्य, शक्ति, बल, राज्य प्राप्ति, शत्रु नाश, आपत्ति निवारण, पुत्र कामना आदिका लागि मात्र होइन, बरु 'परमानन्दोपलब्धि' का लागि सम्पन्न गर्नुपर्दछ । यही नै तन्त्र र शक्तिको समायोजनको लक्ष्य हो । जय गुरुदेव !

# आऊ, म बनाउँछु तिमीलाई तान्त्रिक

***तन्त्र सम्बन्धमा यति धेरै भ्रान्तिहरु छन् कि सामान्य व्यक्ति तन्त्रको नामदेखि डराउँछ । वास्तवमा तन्त्र त जीवनलाई सुव्यवस्थित गर्ने क्रिया हो, जीवनका कमीलाई पूरा गर्ने क्रिया हो। यही तन्त्र विज्ञान सारगर्भितरुपमा प्रस्तुत छ परमपूज्य सद्‌गुरुदेवको अमर ओजस्वी वाणीमा–***

**दीर्घो वताम् पूर्ण मदैव रूपं,**
**तांत्रोक्त रूपं मपरं – च दैवं,**
**ब्रह्माण्ड मेव वदितं सहितं सदैव,**
**ज्ञानं वदैव वदितं सहितं च तुल्यं**

'तन्त्र महार्णव ग्रन्थ'को यस श्लोकमा तन्त्रको पूर्ण व्याख्या गरिएको छ । मैले त एउटा श्लोकलाई लिएर त्यसैको मात्र व्याख्या गर्छु । पूरा ग्रन्थमा त हजारौँ श्लोक हुन्छन् । एकएक श्लोकको व्याख्याले आफैमा पूर्ण अर्थ बोकेको हुन्छ ।

तन्त्र महार्णव आफैमा अद्वितीय ग्रन्थ हो । तन्त्रको अर्थ हो– कुनै पनि कार्यलाई अत्यन्तै व्यवस्थितरूपले गर्ने क्रिया । यत्ति नै हो तन्त्रको अर्थ । कैयौँ वर्षदेखि हामी तन्त्रमय छौँ । जहाँ तन्त्र छ त्यहाँ स्वतन्त्रता छ । यसको अर्थ यो हो कि आफैलाई पूर्णताका साथ बुझ्ने क्रिया । स्वतन्त्र शब्द त्यसकारण बन्यो । यस्तो पनि हुन सक्छ कि तिमी शिविरमा आउँदा कोही पल्टिरहेको छ, कोही उभिरहेको छ, म प्रवचन गरिरहेको छु र कोही बदाम खाइरहेको छ । तर तिमी पूर्ण एकाग्रचित्त भएर बसेका छौ भने यो तन्त्रको तरीका हो ।

तन्त्रमा त मानिस अघोरी हुन्छ, राता आँखा हुन्छन्, जँड्याहा हुन्छ, पञ्चमकार हुन्छ भन्ने तिम्रो मानसमा छ भने यो चिन्तन आधारहीन र निराधार छ । तान्त्रिक ग्रन्थमा कहीँ पनि यी कुराहरूको उल्लेख भएको पाइँदैन । मैले ठोकुवा यसकारण गरेको हो कि मैले जति तन्त्रको अध्ययन गरेको छु, सायद त्यति त पृथ्वीमा कसैले गरेकै छैन ।

गुरु गोरखनाथपछिका केही ढोंगी र पाखण्डी अज्ञानीहरूले तन्त्रको बारेमा भ्रान्ति फैलाए । उनीहरू केवल मानिसहरूलाई डर त्रास देखाएर पैसा लुट्न चाहन्थे । जब सरल तरीकाले हात जोडेर केही मिलेन तब ती साधुहरूले तर्साउन शुरु गरे । सुलफा पिउन शुरु गरे, यसको बानी बस्न गयो । सुलफा पिउनाले कोही महान् बन्छ भने सुलफा, बिडी, चुरोट पिउनेहरू त हजारौँ छन् । तिनीहरू सबै उच्चकोटिका तान्त्रिक हुन्थे ।

**मद्यं मांसं तथा मत्स्यं मुद्रा मैथुन मेव च**
**मकारं पंचवर्गस्य स तान्त्रिक भव उच्चते ।**

तान्त्रिक उही हुन सक्दछ जसले पञ्चमकारको प्रयोग गर्दछ। उनीहरूले एउटा झूटो श्लोक बनाए, एउटा परिपाटी चलाए । उनीहरूका अनुसार तान्त्रिक हुनका लागि रक्सी पिउनु जरुरी छ, मासु खानु जरुरी छ, माछा खानु जरुरी छ, पैसा बटुलेर मजा लिनु जरुरी छ, मैथुन र परस्त्रीगमन जरुरी छ ।

जसले पञ्चमकारको साधना गर्छ, ऊ तान्त्रिक हो भन्ने झूटो परिपाटी उनीहरूले बनाए । उनीहरू सुलफा पिउँथे । यसबाट आँखा रातो हुन्थ्यो । रक्सीले मातिएको मानिसको मुखबाट गाली त निस्कन्छ नै ! उनीहरूको मुखबाट गाली बेइज्जतीका शब्द निस्कन्थे । गाली खाँदा पनि तिमीहरू भने हात जोडेर यिनीहरूलाई ठूलो साधु मान्न थाल्यौ । उनीहरू चिच्याउँदा, गाली गर्दा तिमीहरू हात जोडेर उनीहरूका सामु उभिन्छौ । उनीहरू अह्राउँछन्– गएर फलाना वस्तु लिएर आऊ, एउटा धोती लिएर आऊ । श्राप देला, छोरा-बुहारीलाई मारिदेला भन्ने डरले तिमीहरू उनीहरूले भनेका वस्तु ल्याएर दिन्छौ ।

उसको अर्को माग उठ्छ– पाँच सय रूपैयाँ पनि चाहियो, होइन भने तिम्रो सर्वनाश गरिदिन्छु ।

जसले धोती मागेर लाउँछ ऊ के तान्त्रिक होला, उसले अरूको के कल्याण गर्ला ? जसमा एउटा धोती किन्ने क्षमता छैन उसले तिम्रो के कल्याण गर्ला ? जसमा पाँच सय रूपैयाँ कमाउने क्षमता छैन, जसले तिमीसँग भीख मागिरहेको छ, ऊ कसरी तिम्रो गुरु बन्न सक्ला ? कसरी तान्त्रिक बन्न सक्ला ? यस्ताहरूसँग डराउनु आवश्यक छैन ।

कुनै तान्त्रिक तिम्रो सामु आँखा जुधाएर उभिन्छ भने तिमी पनि आँख जुधाएरै उसको सामु उभिऊ । एक सेकेण्डमा ऊ झुक्नेछ । तिमीसँग आँखा जुधाउने साहस यस्ता तान्त्रिकहरूमा हुनै सक्दैन किनकि तिमी मेरा शिष्य हौ र मेरा शिष्यहरू आफैमा अद्वितीय हुन्छन् ।

यी पाखण्डीहरूसँग डराउनु जरुरी छैन, उनीहरूले केही पनि हानि गर्न सक्तैनन् । हानि गर्ने क्षमता उनीहरूमा छँदैछैन । वरदान दिने क्षमता पनि उनीहरूमा छैन ।

तन्त्रको पद्धति अर्कै छ । पद्धति त प्रत्येक सम्प्रदायका अलग अलग नै हुन्छन् । शैव पद्धति अलग छ, वैष्णव पद्धति अलग छ, शाक्त पद्धति अलग छ, भैरव साधना पद्धति अलग छ । पद्धतिको रूप मात्र भिन्न हो । वास्तवमा त तन्त्रको मूल तत्त्व एकै हो ।

बेसनबाट पच्चीसभन्दा बढी प्रकारका मिठाई बन्न सक्छन् । यतिका धेरै प्रकारका मिठाईको मूल त बेसन नै हो । वस्तुहरू अवश्यै पच्चीसथरिका देखिएलान् । मूलरूपमा सबै एउटै वस्तु हुन् । तिमी कुनै पनि पद्धतिको सहारा लिन सक्छौ– चाहे शाक्त पद्धतिको साहारा लेऊ, चाहे वैष्णवको । गृहस्थले पनि तन्त्र पद्धतिको सहारा लिन्छन् भने केही दोष छैन । यसबाट उसलाई केही नोक्सानी हुन सक्दैन । बरु तिमीले ठीक तरीका नअपनाउनाले फल मिल्न नसक्ला । म कुनै देवतालाई बोलाउँछु भने नआउनु सम्भव छ । तर आएर मेरो घाँटी छिनाउनु सम्भव छैन । तन्त्र आफैमा आत्मबल जाग्रत गर्ने र स्वतन्त्र हुने पद्धति हो । केवल म बहादुर छु भन्नाले मात्रै तिमी बहादुर हुन सक्दैनौ । केवल कुराबाट मात्रै तिम्रो बहादुरी सिद्ध हुँदैन । क्षमता, संकल्पशक्ति, दृढता, अनुहारमा ओज, पौरुष, वक्षस्थलले स्वतः बताउनेछ कि तिमी मर्द हौ । तिम्रो बोलीबाट नै यस कुराको आभास हुन्छ कि तिमीमा क्षमता छ– बोल्ने क्षमता, गर्ने क्षमता र संकल्पशक्तिको क्षमता । तन्त्र आफैमा पूर्ण निष्ठाका साथ, तागतका साथ, बलपूर्वक कार्य गर्ने क्रिया हो ।

मैले भनेको छु कि जीवनमा आफ्नो र अरूको भाग्यलिपि बदल्नका लागि एउटा क्षमता चाहिन्छ । तिमी आफै जब दरिलो बन्छौ, हिम्मतिलो बन्छौ भने यस्तो गर्न सक्छौ । तिमी साधनात्मक पद्धतिबाट हिम्मतिलो बन्न सक्छौ ।

कुनै व्यायाम गर्नाले हिम्मतिलो बन्न सकिन्न । धेरै व्यायाम गरेर कोही पनि महान् बन्न सक्दैन । गामा भन्ने पहलवान् भारतमा प्रख्यात थिए । उनले सैयौं कुस्ती लडे । तर वृद्धावस्थामा उनको अवस्था यस्तो भयो कि उनी उभिन पनि नसक्ने भए । उनलाई कुनै रोग थिएन । केवल शरीरमा तागत थिएन । एकदिन उनी एउटा नालीमा खसे र मरे । मर्नुको कारण यो थियो– उनमा संकल्पशक्ति थिएन । जबसम्म उनले व्यायाम गरिरहे तबसम्म शरीरले साथ दिइरह्यो । जब संकल्पशक्ति क्षीण भयो, त्यसपछि त एक चौथाई दूध पचाउने क्षमता पनि उनमा रहेन । नालीमा खसेपछि बाहिर निस्कने हिम्मतसम्म पनि रहेन र उनी त्यहीं समाप्त भए ।

यसैले दैवी सहायताबिना मनुष्यले आफूलगायत अर्काको भाग्य लिपिलाई बदल्न सक्दैन । यस्तो दैवी सहायता, देवताहरूको सहायता चाहे जगदम्बा होऊन्, चाहे भैरव होऊन्, चाहे भवानी होऊन्, चाहे षोडशी होऊन्, चाहे त्रिपुरासुन्दरी होऊन्– प्राप्त गर्ने पद्धति तन्त्रात्मक पनि छ र मन्त्रात्मक पनि । तर तन्त्रको माध्यमबाट कार्य हुन्छ नै, त्यो फेरि रोकिन्न, रोकिनु सम्भवै छैन । तर यसका लागि तिमी क्षमतावान् बन्नु आवश्यक छ, तागतिलो हुनु आवश्यक

छ । कमजोर र कायरहरूका साथ तन्त्र चल्न सक्दैन र कमजोर र कायरहरूको परिभाषा गामाको उदाहरणबाट बुझ्न सकिन्छ । धेरै मोटो हुनाले मात्रै तागतिलो हुँदैन ।

गान्धी अत्यन्तै दुब्ला पातला थिए, बयालीस किलो तौलका थिए । उनले करोडौँ मानिसलाई आफूतिर खिँच्न सके । अंग्रेजहरूलाई हाँक दिएर उनीहरूलाई हराए । उनी हड्डीहरूका एउटा ढाँचा मात्र थिए । बिना लठ्ठी हिँड्न सक्दैनथे । तर उनमा संकल्पशक्ति दृढ थियो । आस्थावान् थिए उनी । उनी चेतनावान् थिए ।

हामीले चाहे तन्त्र साधना गरौँ, चाहे मन्त्र साधना, गिडगिडाएर गरौँ, वा हात जोडेर गरौँ तर दृढता र संकल्पशक्तिका साथ गर्नुपर्छ ।

तिमीले यजुर्वेदका मन्त्रहरूलाई शायद पढेनौ होला । पढेर पनि अर्थ बुझेनौ होला । यजुर्वेदमा कुनै महान् घटना लुकेको छैन । कुनै यस्तो आश्चर्य होइन यजुर्वेद, अथर्ववेद र ऋग्वेद । तिनीहरूमा भनिएको छ– हे इन्द्र ! तिमीले मेरो खेतमा वर्षा गर जसबाट धान धेरै फल्न सकोस् ।

उनीहरूले देवताहरूलाई याचना गरे– हे अग्निदेव ! तिमीले मेरो यस्तो कार्य गरिदेऊ । हे यम ! तिमीले मलाई मृत्युबाट बचाऊ । आर्यहरूले पनि ती देवताहरूको सहायता लिए । जुन शब्दहरूबाट उनीहरूसँग याचना गरे त्यसलाई मन्त्र भनिन्छ ।

तिम्रो खल्तीमा यदि पाँच हजार रूपैयाँ छ भने पाँच रूपैयाँ तिम्रो लागि केही होइन । पाँच रूपैयाँ त तिम्रो लागि धेरै सानो हुन्छ । भिखारी गिडगिडाउँदै आएर हात जोडेर तिमीलाई 'हजूर धेरै दयालु हुनुहुन्छ, दानी हुनुहुन्छ, म तीन दिनदेखि भोको छु, मेरो बच्चा पनि बिरामी छ, मलाई पाँच रूपैयाँ दिनुहोस् ।'

यो जरुरी छैन कि तिमीले पाँच रूपैयाँ दिनेछौ । उसको लागि पाँच रूपैयाँ अति आवश्यक छ किनकि उसलाई पेट भर्नुछ । उसको जीवनको यो अभाव हो । हुन सक्छ, गिडगिडाउँदा पनि तिमीले उसलाई पाँच रूपैयाँ दिँदैनौ । तर उसले तिमीलाई छोड्दै छोडेन भने चाहिँ तिमीले पक्कै दिनेछौ ।

दोस्रो यस्तो तरीका तन्त्र हो । तन्त्रको अर्थ हो– देवताहरूलाई बाध्य गर्नु, विवश पार्नु ताकि तिम्रा इच्छा पूर्ण गरून्, जुन तिमीले माग्यौ त्यो देऊन् । तर गलत वस्तुका लागि तिमीले देवताहरूलाई बाध्य पार्न सक्दैनौ । गर्छौ भने पनि केही परिणाम तिमीलाई प्राप्त हुनेछैन । तर सही उद्देश्यका लागि तन्त्रको प्रयोग गरिन्छ भने निश्चय नै प्रभाव पर्छ । यसमा दुईमत छैन ।

आजभोलि तन्त्र अति आवश्यक छ । किन छ ? किनकि आजको युगमा साधकले दैनिक दस घण्टा बसेर मन्त्र जप र साधना गर्न सक्दैन । जीवनमा दौडादौड छ । यसकारण मानिसले सबै कुरा छोडेर लामो साधना गर्न सक्दैन । तन्त्रमा कुनै यस्तो उपाय छ जसको माध्यमबाट सम्पूर्ण जीवनलाई आनन्ददायक बनाउन सकियोस् ।

यसका लागि तन्त्र महार्णवमा बताइएको छ– पाँचवटा यस्ता प्रयोग छन् जसको माध्यमबाट जीवनमा पूर्णता प्राप्त गर्न सकिन्छ । पहिलो हो– सम्मोहन प्रयोग । सम्मोहनको अर्थ हो– कसैलाई पनि आफ्नो अनुकूल बनाउन सक्नु । हाकिम भए पनि, राताराता आँखा बनाएर बसेको भए पनि तिमीसँग आँखा जुधाएर तिम्रो सामु उभिन उसले सक्दैन । यो सम्भवै छैन ।

सम्मोहनको तात्पर्य हो– कसैलाई आफ्नो अनुकूल बनाउनु । कसैलाई अनुकूल बनाउने क्रियालाई सम्मोहन भनिन्छ ।

वशीकरण हो– कसैलाई आफ्नो वशमा गर्ने क्रिया । सबैलाई वशीकरण गर्न सकिन्छ । चाहे देवता होऊन् वा जगदम्बा नै किन नहोऊन्, हामीले उनीहरूलाई पनि वशमा गर्ने क्रिया गर्नुछ । उनीहरूलाई पनि अनुकूल बनाउनुछ । यदि हामीमा संकल्पशक्ति छ भने उनीहरूलाई हाम्रो सामु आउनुपर्ने हुन्छ । उनीहरू देवता हुन्, कुनै आश्चर्यजनक चीज होइन । यदि उनीहरू देवता हुन् भने हामीहरू मनुष्य हौं । उनीहरूको योनि अलग छ, हाम्रो योनि अलग छ । कुरा यत्ति मात्रै हो ।

उनीसँग हजार रूपैयाँ छ, हामीसँग पाँच रूपैयाँ पनि छैन । हजार रूपैयाँबाट पाँच रूपैयाँ दिँदा उनलाई कुनै

फरक पर्ने छैन । तर हामीलाई पाँच रूपैयाँको आवश्यकता छ । यदि देवताहरूलाई वशीकरण गरेर धेरै प्राप्त गर्न सकिन्छ भने शत्रुहरूलाई पनि वशीकरण गर्न सकिन्छ, कुनै न्यायाधीशलाई पनि गर्न सकिन्छ, वकीललाई गर्न सकिन्छ, प्रेमीलाई गर्न सकिन्छ, प्रेमिकालाई गर्न सकिन्छ र गुरुलाई पनि गर्न सकिन्छ ।

वशीकरणको तात्पर्य हो कि हामीले प्रतिकूल परिस्थितिहरूलाई आफ्नो वशमा गर्न सकौँ । जीवनमा त प्रतिकूल परिस्थितिहरू आउँछन् नै । यसैले तान्त्रिकहरूले परिस्थितिहरूलाई आफ्नो वशमा राख्न वशीकरणको प्रयोग गरे । तर कसैलाई व्यर्थै सताउने वा कसैलाई हानी पुऱ्याउनका लागि यसको प्रयोग गर्न सकिन्न । सम्भव नै छैन । आफ्नो हितका लागि त गर्न सकिन्छ, तर आफ्नो हितले कसैको नोक्सान हुन्छ भने यो प्रयोग फलदायी हुँदैन ।

अर्को प्रयोग हो– उच्चाटन । यसको अर्थ हो– एक व्यक्ति र अर्को व्यक्तिबीच डिफरेंस उत्पन्न गर्नु, लडाइँ गराउनु, मतभेद गराउनु ।

तिमी भन्लाउ– हामी यसो किन गरौँ, गुरुदेव ? यस्तो हामीलाई किन सिकाइरहनुभएको छ ?

तर कोही तिम्रा नजिक खुकुरी लिएर आउँछ भने ऊसित गिडगिडाउनाले उसले छोड्ला ? यो एउटा नीति हो । चाहे यसलाई तिमी राजनीति भन, चाहे कूटनीति । यस डिफरेंस उत्पन्न गराउने क्रिया वा मतभेद उत्पन गर्ने क्रियालाई विद्वेषण पनि भनिन्छ ।

अर्को हो मोहन । यसको अर्थ हो– सबैलाई मोहित गर्ने क्रिया, सम्पूर्ण भीडलाई– एकजनालाई होइन । एउटा पूरा समूहलाई आफ्नो अनुकूल बनाउने क्रिया मोहन हो ।

तन्त्रको पाँचौँ प्रयोग मारण हो । यदि कुनै उपाय नै बचेन भने मारण प्रयोग पनि गर्न सकिन्छ । तर मारणको प्रयोग छुरी घोपेर मार्नु होइन । साधुहरूले आफ्नो क्रोधका लागि मारण प्रयोग गर्दछन्, तन्त्रद्वारा लोभको मारण गर्दछन् । यो पनि मारण हो । शत्रुहरूलाई पददलित गर्नु पनि मारण हो । शत्रुमर्दन क्रिया पनि मारण हो । यहाँ मारणको अर्थ मृत्यु होइन । मारणको अर्थ हो– पददलित हुनु, पराजित हुनु ।

यी पाँचै प्रयोग हाम्रो जीवनका लागि, हाम्रो भौतिक जीवनका लागि आवश्यक तत्त्व हुन् जसको माध्यमबाट हामीले जीवनलाई ज्यादा सुखी, ज्यादा सुखमय बनाउन सक्छौँ । जबसम्म जीवन सुखमय बन्दैन तबसम्म तनाव रहन्छ, तबसम्म साधना गर्न सकिन्न, आध्यात्मिक धरातलमा उभिन सकिन्न ।

यसैले उच्च साधनाहरूको पृष्ठभूमिका लागि यसको प्रयोग गर्नुपर्दछ । तिम्रो जीवनमा यदि कलह छ भने, भय छ भने, तनाव छ भने तिमी साधनाहरूमा एकाग्र हुन सक्दैनौ ।

तिमीले सोध्न सक्छौ कि विद्वेषणजस्तो तत्त्व किन आवश्यक छ ? मानौँ, तिम्री छोरी कसैसँग प्रेम गर्न लागी । यसबाट तिमी धेरै चिन्तित भयौ र धेरै बदनामी महसुस गरिरहेछौ । अब के गर्ने भनेर उपाय सुझिरहेको छैन । सम्झाउँदा उनी सम्झिन्न । तिमी जति सम्झाउँछौ, उति नै ऊ जिद्दी गर्न थाल्छे । तिमी हात जोड्छौ, बुझाउँछौ, इज्जत जाने डर देखाउँछौ भने पनि केही दिनपछि ऊ घरबाट भाग्न सक्छे । तिमी के गर्छौ ?

तिमीलाई त्यो केटा ठीक छैन र तिम्री छोरीको भविष्य बर्वाद हुने भो भन्ने यदि लाग्न थाल्यो भने विद्वेषणद्वारा उनीहरूबीच मतभेद गर्न सक्छौ । आफ्नी छोरीद्वारा तिमीलाई थाहा हुन आयो कि अब उसको जीवन सुरक्षित छैन भन्ने अवस्थामा मात्र यस्तो गर्न सकिन्छ । केटीको त्यति साह्रो विवेक नभएको र राम्रो नराम्रोको ज्ञानको अभावको अवस्थामा यो प्रयोग आफैमा विवेकपूर्ण साधन बन्न सक्छ ।

यस्तो घटना त सबैको जीवनमा घटिरहेको पाइन्छ । कोही शत्रुहरूबाट पीडित छन्, कुनै शत्रु ईर्ष्यावश तिम्रो सत्यानश गर्न तम्सिरहेका छन् । उनीहरूका अगाडि तिमी असहाय अनुभव गरिरहेका छौ भने विद्वेषणद्वारा उनीहरूका बीच मतभेद उत्पन्न गरेर उनीहरूलाई कमजोर गर्न सकिन्छ वा मारणद्वारा उनीहरूलाई पराजित गर्न सकिन्छ ।

व्यक्तिलाई मात्र होइन, बिरामीको पनि विद्वेषण गर्न सकिन्छ, हटाउन सकिन्छ । यो विद्वेषण एउटा क्रिया बन्न सक्छ रोग र रोगीमा विच्छेद गर्न ।

जीवनमा दैनिकरूपमा उपयोगी प्रयोगहरू हुन् यी । तन्त्रमा उच्चकोटिका सैकडौँ प्रयोग छन्, अष्टादश सिद्धि प्रयोग पनि छन् । ती अठ्ठार सिद्धिहरूको प्रयोगलाई प्राप्त गर्नका लागि अगाडि आऊ र मलाई छ महिनाको समय देऊ, मसँगै बस । मैले सिद्धि दिन सकिन भने गुरु हुनु नै व्यर्थ छ ।

तिमी मलाई समय त देऊ, अगाडि त बढ । जब मैले तिमीलाई बोलाएँ भने रोकिने आवश्यकता छैन । केवल शास्त्र पढ्नाले मात्र केही हुनेवाला छैन ।

तन्त्र प्रयोग सिद्ध गर्नको लागि सामग्री पनि आवश्यक हुन्छ । बोल्नका लागि माइकको आवश्यकता भए जस्तै, युद्ध गर्नुपर्दा तरवार, पिस्तोल चाहिने हुन्छ । बिनासामग्री साधनाको युद्धलाई पनि जित्न सकिन्न, सफलता प्राप्त गर्न सकिन्न । संकल्पशक्ति त यसमा चाहिन्छ नै । गुरुको

मार्गदर्शन पनि जरुरी हुन्छ। साथसाथै साधना सामग्री पनि त्यत्तिकै जरुरी हुन्छ। यिनीहरू सबैको व्यवस्था भएमा तिमीले सफलता प्राप्त गर्नेछौ। एउटा कुरा दोहोऱ्याउन चाहन्छु– ईर्ष्यावश वा कसैलाई बिनाकारण हानि पुऱ्याउने वा नोक्सान पुऱ्याउने प्रयोग भने नगर। तिम्रो चिन्तन स्वस्थ होस्, कहीं कतै मलीनता नहोस्। गलत उद्देश्यले गरिएको प्रयोग सफल हुनु सम्भव छैन।

समाजमा तन्त्रको विषयमा अनेकौं भ्रान्तिहरू छन्। भ्रान्तिहरू यसैले छन् कि कसैलाई ज्ञान नै छैन वा अधूरो ज्ञान छ अथवा गलत धारणा छ। तन्त्रद्वारा कसैको अकारण अहित गर्न सकिन्न। स्वार्थवश, लोभवश तन्त्रको प्रयोग गर्न सकिन्न। केही ढोंगी, पाखण्डी स्वार्थवश वा लोभवश केही गर्दछ भने पनि त्यो तन्त्र हुन सक्दैन। अरू त हुन सक्छ तर त्यो तन्त्र भने हुन सक्दैन किनकि तन्त्रको आधार दैवीशक्ति हो र यसको प्रयोग गलत कार्यका लागि गर्नै सकिन्न।

अन्य कैयौं भ्रान्तिहरू पनि नभएका होइनन्। देवीलाई बोका चढाउनुपर्छ भन्ने एउटा भ्रान्ति हो। यसको उल्लेख कुनै शास्त्रमा पनि आएको पाइन्न। जहाँ पाखण्ड छ, त्यहाँ केवल पण्डितहरूको खाने क्रिया मात्र छ। कुन तन्त्रमा लेखिएको छ कि देवीका लागि बोका काट्नुपर्छ भनेर ? तन्त्रमा कुनै घटियापन छैन। तन्त्रमा त श्रेष्ठता छ, सात्विकता छ, उच्चता छ, सफलता छ। पाखण्डी र ढोंगी, भाङ पिउने कैयौं मिल्न सक्छ तर त्यसबाट के प्राप्ति हुन्छ ? यस्तालाई त एक थप्पड हिर्काउँदाखेरि उसको सारा तन्त्र तल झर्दछ। तिम्रो कहीं कतै अहित हुन सक्दैन। यो कुरा त ग्यारेण्टीका साथ लेखेर दिन सक्छु।

यी सामान्य प्रयोग हुन् र तिमीहरूलाई यिनीहरूको बारेमा बताउनुमा मेरो अभिप्राय यो हो कि तिमीहरूले आफ्नो समस्या समाधानका लागि पण्डितहरू कहाँ जान नपरोस्, कतै अन्त जान नपरोस्। उनीहरूलाई सय पचास दिएर तिमीहरूको काम बन्दैन। जगदम्बा र देवीदेवताहरूको सामु हात जोडेर काम चल्नेवाला छैन। तिमी स्वयं यस्तो प्रयोग गुरुसित प्राप्त गरेर आफ्नो समस्याको समाधान गर्न सक्छौ। तिमीभित्रको प्रकाशलाई तिम्रो हृदयमा देखाउन म चाहन्छु यस ज्ञानद्वारा। यसद्वारा तिमीले आफ्नो भौतिक समस्याहरूलाई पनि समाधान गर र आध्यात्मिक जीवनका समस्याहरूलाई पनि हटाऊ। भौतिक जीवनका समस्याहरू हटेमा मात्र आध्यात्मिक जीवनमा उच्चता प्राप्त गर्न सकिन्छ। यी सबै क्रियाहरू भौतिक जीवनका समस्याहरूलाई समाधान गर्ने अचूक प्रयोगहरू हुन्। यी पाँचै प्रयोग र यसको मन्त्र तिमीले आफ्ना गुरुसँग प्राप्त गर्न सक्छौ र भौतिक

जीवनका सबै समस्याहरूलाई दूर गर्न सक्दछौ।

तर यो त तन्त्र प्रयोग हो। तन्त्रको एउटा विशेष प्रक्रिया हुन्छ। मन्त्र साधनामा सबै चल्दछ तर तन्त्रमा चल्दैन। एउटा सानो बच्चा आएर मेरो काखमा बसी पिसाब गर्दछ भने म उसलाई झापड त हान्न सक्दिन। उसलाई ज्ञान नै छैन, सानो बच्चा छ। तर बीस वर्षको जवानले यसो गर्दछ भने म झापड हान्छु।

जब तिमीलाई पूर्णरूपमा तन्त्रमा जानुछ भने विशेष प्रक्रिया त अपनाउनै पर्छ। तिमीले क्षमतावान् हुनुपर्छ। यदि तन्त्रमा लेखेको छ कि रातिको समय उपयुक्त छ भने रातिको समयमा नै गर। जुन सामग्रीको आवश्यकता छ, त्यसैको प्रयोग गर। सम्मोहनमा अलग्गै मालाको प्रयोग गर्नुपर्दछ, वशीकरणमा बेग्लै मालाको प्रयोग गर्नुपर्दछ। जे बताइएको छ त्यही मालाको नै प्रयोग गर्नुपर्दछ। तर संसारमा सर्वश्रेष्ठ र अद्वितीय माला पारद माला बताइएको छ। सामान्यरूपमा यस्तो माला बनाउन सकिन्न। यसैप्रकार भगवान् शिवलाई प्रसन्न पार्न रुद्राक्ष माला सर्वश्रेष्ठ छ किनकि भगवान् शिवसित रुद्राक्षको सीधा सम्बन्ध छ। पारदको अर्थ नै हो सम्मोहन र वशीकरण। उच्चकोटिको चेतनायुक्त बन्ने क्रिया। यो भगवान् शिवको पूर्ण सत्व हो, वीर्य हो, पूरा शरीरको निचोड हो। यसैले पारदलाई ठोस गरेर त्यस पारदको माला बनायौं भने त्यो सर्वश्रेष्ठ सिद्धिदायक सिद्ध

हुन्छ । अरू मालाले सिद्धि प्राप्त नहुने भन्ने होइन । तर पारद माला आफैमा अद्वितीय छ । यो एउटा दुर्लभ वस्तु हो जुन सामान्यरूपमा प्राप्त हुन सक्दैन । पारद मालालाई लाउँदैमा नै सम्मोहनको क्रिया प्रारम्भ हुन जान्छ । आफैमा सम्मोहित हुने क्रिया, आफैमा पौरुषतायुक्त हुने क्रिया, सौन्दर्ययुक्त बन्ने क्रिया हो यो । पारद सुनको प्रतिरूप हो । सुन त धेरै सानो रूप हो त्यसको, पारद त पारसको रूप हो । उच्चकोटिका योगी, उच्चकोटिका साधु, उच्चकोटिका व्यक्तिले पारद माला उपयोग गर्दछन् । कसैसँग भेट्न जाँदा यो माला पहिरेर गइयो भने यस्तो हुनै सक्दैन कि त्यस मानिसले तिम्रो कुरा नमानोस् । यो सम्भव नै छैन । पारद मालालाई लगाउनाले शरीरको ओज र बल अत्यन्तै विकसित हुन्छ ।

तन्त्रको क्षेत्रमा जति लाग्छौ, त्यति नै नयाँ ज्ञान प्राप्त हुन्छ । मैले तन्त्रका पाँच अद्वितीय प्रयोग बताएँ । तर भुलेर पनि त्यसको दुरूपयोग नगर । हाम्रो उद्देश्य कसैलाई दुःखी बनाउनु होइन, न त कसैले हाम्रो अपमान गरोस् भन्ने हाम्रो चाहना हो । हामी यस्तो साधु व्यक्तित्व बन्न सक्दैनौ, हामीलाई बुद्ध बन्ने आवश्यकता छैन कि हामी कसैको गाली सहँदै बसौँ । हामी यस्तो कायर छैनौँ । कायरता र अपमानभन्दा त मृत्यु श्रेष्ठ छ । जीवन त यस्तो हुनुपर्दछ प्रकाशवान्, क्षमतावान् ! यी सबै यी साधनाहरूबाट प्राप्त हुन्छन् । म आफ्नो जीवनका अनुभवहरूलाई बताउँदैछु । यसैले मेरो कुरामा प्रामाणिकता र सत्यता छ ।

यी पाँच प्रयोग मूलतः दुर्गासँग सम्बन्धित छन् । दुर्गा आफैमा तान्त्रिक शक्ति हो । दुर्गासप्तशती पूर्णरूपमा तान्त्रिक ग्रन्थ हो । यसको पहिलो श्लोकदेखि लिएर अन्तिम श्लोक पूरा तन्त्रमा आधारित छ ।

**यो मां जयति संग्रामे, यो मे दर्प...**
**यो मे... समय भर्ता भविष्यति**

दुर्गा स्वयं उभिएर भन्दछिन् कि जुन तन्त्रको क्रिया छ, जुन तन्त्रको पद्धति छ, त्यसद्वारा नै मलाई जान्न सकिन्छ । जो तान्त्रिक हो उसले मलाई जान्न सक्दछ । जो स्वयं बलिष्ठ छ, उसले मलाई जान्न सक्दछ, कायरले होइन । जो तान्त्रिक हो, निष्ठावान् छ, ज्ञानवान् छ, गुरुवान् छ, जसभित्र चेतना छ, जसभित्र प्रकाश छ, उसले मात्र भगवती जगदम्बालाई वशीकरण गर्न सक्दछ, साम् साक्षात् उपस्थित पनि गर्न सक्दछ र आफ्नो अनुकूल गर्ने क्रिया पनि गर्न सक्दछ ।

दुर्गासप्तशतीको पाठ गर्नाले मात्र केही हुने वाला छैन । सयौँ पण्डितहरूले पाठ गरेका छन् । पाँचसय वर्षदेखि पाठ हुँदै आइरहेको छ, उनीहरूलाई पूरा कण्ठस्थ छ । यसबाट के हुन्छ ?

त्यसलाई बुझ्ने क्रिया हुनुपर्दछ । दुर्गासप्तशतीको एकएक श्लोकमा के व्याख्या छ, अर्थ के हो, कस्तो चिन्तन हो, यो जान्नु आवश्यक छ ।

जुन पाँच प्रयोग मैले बताएँ, यी सामान्य प्रयोग होइनन् । यी त अत्यन्तै बहुमूल्य र उपयोगी छन् । जहाँ किलाको आवश्यकता हुन्छ, त्यहाँ किलाको नै काम आउँछ । तिमी चाहे जतिसुकै करोडपति नै किन नहोऊ, तरवारमा लुगा झुण्ड्याउँदैनौ । यसका लागि त किलाकै आवश्यकता पर्दछ । युद्धको क्षेत्रमा किलाले काम चल्दैन । त्यहाँ त तरवार नै बोक्नुपर्दछ । त्यसैले कुनै पनि ज्ञानको प्रयोग हामी आफ्नो विवेकले गरौँ । स्वार्थवश, लालचवश, प्रतिस्पर्धा वा ईर्ष्यावश हामीले कसैको पनि अहित नगरौँ र कसैद्वारा हाम्रो अहित पनि हुन नदिऔँ । दुवै कुरालाई मैले साथसाथै जोडिरहेको छु । कसैले हामीसित आँखा जुधाएर कुरा नगरोस् । यदि हामी मन्त्र सिद्ध छौँ, हामीसँग सिद्धि छ, हामीसित क्षमता छ भने बोल्ने क्षमता पनि हुन्छ हामीमा । चाहे उनीहरू हाकिम होऊन् वा उच्चाधिकारी अथवा समाजका जोसुकै किन नहून् । हामीभन्दा उच्च अरू कोही हुन सक्दैन यदि हामीले आफ्नो प्रकाशमा स्वयंलाई हेर्ने क्रिया गर्दछौँ भने । तिम्रो प्रकाश उत्पन्न हुन्छ भने तिमीले मलाई पनि चिन्नेछौ, स्वयंलाई पनि चिन्नेछौ, गुरुलाई पनि चिन्नेछौ, आफ्नो ज्ञानलाई चिन्नेछौ, आफ्नो चेतनालाई चिन्नेछौ ।

मैले बताएका पाँच प्रयोगका मन्त्र दुर्गासप्तशतीमा पनि

लुकेर बसेका छन् । पूरा शास्त्रमा खोजेमा पनि यो मन्त्र कतै पाइने छैन तर म भन्दैछु कि मन्त्र त्यसै ग्रन्थमा छ । तिमी पाठ गर्दै बस्छौ र पहिलो अध्याय बुझ्न नपाउँदै दोस्रो अध्याय शुरु गर्छौ । यसरी पाठ गर्दैमा के हुन्छ ? बिचरी दुर्गाले के गरुन् ? पण्डित तिम्रो घरमा आएर पाठ गरेर जान्छ, दुर्गा जहाँ उभिएकी छिन्, त्यहीँ छिन् । पैसा लिएर साँझ पण्डित फर्कन्छ । केही भएन । जय दुर्गा माता भनेर आरती गर्दै रहनाले मात्र केही हुँदैन, दिनहुँ घिउको दीयो बाल्दैमा मात्र केही हुनेवाला छैन ।

तर तिमीले साधना गर्छौ भने दुर्गालाई साक्षात् आउनैपर्ने हुन्छ । यो यस्तो मन्त्र हो । यो दुर्गासप्तशतीको मन्त्र हो । दुर्गासप्तशतीमा स्पष्टरूपमा लेखिएको छ कि जबसम्म यी पाँचै प्रयोगलाई सिद्ध गरिँदैन तबसम्म सिद्ध पुरुष पनि बन्न सकिन्न । सिद्ध पुरुष बन्नका लागि, जीवनलाई अनुकूल बनाउनाका लागि, जीवनलाई सुखमय बनाउनाका लागि आवश्यकता छ यी पाँचै प्रयोगलाई सिद्ध गरेर सफलता प्राप्त गर्न ।

भौतिक जीवनका बाधाहरूमाथि विजय प्राप्त गर्नका यी प्रयोगहरूलाई सिद्ध गरौँ । जीवनमा निर्धनता, दैन्यतालाई मेट्नका लागि लक्ष्मी साधना पनि उत्तिकै जरुरी छ । लक्ष्मी साधना पनि तन्त्र क्षेत्रको अभिन्न अङ्ग हो । पाँच प्रयोग जति आवश्यक छन्, उत्तिकै लक्ष्मी प्रयोग पनि आवश्यक छ । तन्त्रको माध्यमबाट यी उच्चतम प्रयोग हुन्, त्यहीँ तान्त्रिक विधिबाट उच्चकोटिको लक्ष्मी साधना पनि छ । लक्ष्मी साधनाबाट धनवान् बनौँ तर धनप्रति अनासक्त रहौँ । अनासक्त रहन सकियो भने तनाव रहनै सक्दैन । यसभन्दा पनि ठूलो कुरा धनको सही सदुपयोग होस् । पूर्ण ऐश्वर्य, जसलाई सहस्त्र लक्ष्मी ऐश्वर्य भनिन्छ, अष्टलक्ष्मी भनिन्छ– धनधान्य, धरा, कीर्ति, आयु, यश, जीवन, कीर्ति होस्, सम्मान होस्, पुत्र होस्, पौत्र होस्, घरमा शान्ति होस्, सुख सौभाग्य होस्, ऐश्वर्य होस्, यी सबै मिलेर जे बन्दछ त्यसलाई लक्ष्मी भनिन्छ । कागजको नोटलाई लक्ष्मी भनिँदैन । दुर्गासप्तशतीमा एउटा अद्बितीय लक्ष्मी साधना दिइएको छ जसको माध्यमबाट यी सबै प्राप्त गर्न सकिन्छ र प्रामाणिकताका साथ प्राप्त गर्न सकिन्छ ।

जसरी पारद शिवलिङ्ग संसारको अद्बितीय विग्रह हो, त्यसरी पारद लक्ष्मी पनि अद्बितीय छ । त्यसको घरमा स्थापना आउने पिँढीका लागि सौभाग्यको चिह्न हुनेछ । छ महिनाभित्रमा यस पारद लक्ष्मीको माध्यमबाट एउटा परिवर्तन आउनेछ । अद्बितीय परिवर्तन– सम्पन्नतामा, श्रेष्ठतामा र उच्चतामा । यस्तो तिम्रो जीवनमा होस् म यही कामना गर्दछु । पारद लक्ष्मी कति अद्बितीय विग्रह हो, पूर्ण मन्त्रश्चेतनायुक्त छ भनेर स्वयं अनुभव गर्न सकिन्छ । यसको साथमा त्यो लक्ष्मी मन्त्र होस् जुन दुर्गासप्तशतीको मूलाधार हो ।

**अथो मां पूर्व वैचिंत्यं, सा लक्ष्मी वदतै उच्चते ।**

मार्कण्डेयका अनुसार दुर्गासप्तशतीका सारभूत एकएक अक्षरलाई लिएर यदि त्यसको माला उनिन्छ भने त्यसको मूलमा पारद लक्ष्मीको विग्रहको पूरा साधना रहेको देखिन्छ । तिमी गुरुसँग तन्त्रमा आधारित यी सबै प्रयोग प्राप्त गर्न सक, यस्तो तिम्रो सौभाग्य रहोस् र तिमी पूर्ण भौतिक उच्चता र श्रेष्ठता प्राप्त गर्दै आध्यात्मिक धरातलतिर अग्रसर हुन सक, यस्तै आशीर्वाद दिन्छु, कल्याण कामना गर्दछु ।

**–सद्गुरुदेव परमहंस स्वामी निखिलेश्वरानन्दजी**

# गुरु प्रेम गुरु साक्षात्कार मानव जीवनको आधार

## सम्पूर्ण गुरूप्रेमी साधक साधिकाहरूका लागि खुशीको खबर

अन्तर्राष्ट्रिय सिद्धाश्रम शक्ति केन्द्र, गुरु प्रेम आश्रम बैंगालोरमा परमपूज्य सद्‌गुरुदेवको सानिध्यतामा गुरु मन्त्र दीक्षा सहित दिव्य सावर साधनाहरु भारत, नेपाललगायत सम्पूर्ण विश्वभरिका इच्छुक गुरु प्रेमी साधक साधिकाहरुका लागि खुला गरिएको छ । समयमै सम्पर्क गरी आध्यात्मिक एवं भौतिक लाभ प्राप्त गर्नुहोस् ।

सम्पर्कः
अन्तर्राष्ट्रिय सिद्धाश्रम शक्ति केन्द्र, गुरू प्रेम आश्रम
जयनगर, बैंगलोर
फोनः ९१९९८६७२६६११, ९१९९८६७२७७००
इमेलः gurupremashram@gmail.com
वेबः gurupremashram.com

The Spiritual Voice
Monthly Web Magazine

*(परमपूज्य सद्‌गुरुदेव श्री शिव गोरक्षसम्बन्धी विभिन्न सत्य तथ्य कुराहरूको बारेमा जानकारी दिने क्रममा श्री सावर संरचना शक्ति केन्द्र नेपालद्वारा प्रकाशित तथा योगी शिवशक्तिश्वरानन्द एवं योगी कर्मवीरानन्दद्वारा लिखित 'श्री शिव गोरक्ष-नाथंप्रदाय' ग्रन्थबाट विभिन्न प्रसंगहरू क्रमशः प्रकाशित गर्दै आइरहेका छौं ।)*

# श्री शिव गोरक्ष-नाथंप्रदाय

## गुरु गोरक्षनाथ उपदेश प्रसङ्ग

राजा निमी पुनः प्रश्न गर्नुहुन्छ– 'हे योगेश्वर ! नारायण कुन समयमा, कुन वर्णमा र कुन आकारमा हुनुहुन्छ र उहाँको कुन नामलाई कुन विधिबाट पूजा गर्नुपर्दछ ?'

राजा निमीको यस्तो प्रश्न सुनी नवौं योगेश्वर श्री शम्भुयति गुरु गोरक्षनाथ भन्नुहुन्छ– 'हे राजन् ! चारै युगमा चार वर्ण, रूप, रङ र आकार धारण गर्ने भगवान्‌को पूजा अनेक विधिबाट गरिन्छ । सत्ययुगमा शुक्लवर्ण, चार भुजाधारी, जटाधारी बल्कल लगाएका ब्रह्मचारीरूपमा भगवान् रहन्छन् । यस युगका मनुष्य शान्ति, वैर-विरोधरहित, सबैलाई मित्रको रूपबाट सुख-दुःखमा साथ दिने, ध्यानी, योगी, इन्द्रियलाई जित्ने र अघि वर्णन गरिएको भगवान्‌को स्वरूपलाई पूजा गर्ने गर्दछन् । हंस सर्वदा वैकुण्ठ, धर्म, योगश्वर, मनु, ईश्वर, पुरुष, अव्यक्त, परमात्मा आदि नामको जप गर्दछन् । त्रेतायुगमा रातो रङ्गका, चार भुजाधारी, कम्मरमा तीन हातको मेखला धारण गर्ने, पिङ्गल रङजस्तो कपाल हातमा श्रुवा लिएका यज्ञमूर्ति भगवान् हुन्छन् । यस समयमा पुरुष धर्मात्मा ब्रह्मज्ञानी हुन्छन् र श्रीहरि नारायणलाई तीन वेदमा बताइएअनुसार वेदविधिबाट पूजा गरिन्छ र पुरुष विष्णु यज्ञ, विष्णु गर्भ सर्वदेव, उरुक्रम, वृषाकपि, जपन्त, उरुगाय आदि नामको जप गर्दछन् । द्वापरयुगमा कालो रङ्गको पहेँलो वस्त्र धारण गर्ने, आयुधहरू धारण गर्ने एवं बत्तीस लक्षणले युक्त हुन्छन् र तत्त्वज्ञानी पुरुष वेद र वासुदेव, शिवशङ्कर, सच्चिदानन्द, सर्वव्यापक, पतीत पावन आदि नामको जप गर्दछन् । कलियुगमा श्याम रङ्गका, कान्तिमान्, शङ्ख, चक्र, गदा, पद्मधारी नन्द सुनन्द आदि पार्षदहरूले घेरिएका कल्की भगवान् हुनुहुन्छ र उनै भगवान्‌लाई ईश्वर, गोरक्ष, माधव, विभु, सर्वज्ञ आदि नामले जप गर्दछन् ।

यसप्रकार चारै युगमा भगवान्‌को स्तुति, पूजा गरिन्छ । यद्यपि गुणग्राही पुरुष र युगको अपेक्षा कलियुगको नै बढी प्रशंसा गाइन्छ किनकि सत्ययुगमा ध्यानबाट र त्रेता युगमा यज्ञबाट जुन फल मिल्दछ त्यही फल कलियुगमा केवल नाम जप, मन्त्र जपबाट मिल्दछ । नाम जपबाट नै मुक्तिरूपी

शान्ति प्राप्ति हुन्छ र जीवन जन्म-मृत्युको चक्रव्यूहबाट छुट्छ। राजा निमी ! अन्य युगमा जस्तै कलियुगमा गोरक्षेश्वर प्रभु परमेश्वर हुनुहुन्छ, त्यहाँ हामी पनि जन्म लिएर उहाँको भक्त कहलाउनेछौँ । हे राजन् ! कलियुगको कुनै देशमा, विशेष गरी द्रविड देशमा, भगवान्का भक्तले जन्म लिन्छन्। जहाँ ताम्रपर्णि, कृतमाल, पयश्विनी, कावेरी एवं महानदीबाट निस्केका नदीहरू हुन्छन्, त्यही द्रविड देश हो। जो पुरुष तिनै नदीहरूको जल पिउँछन्, उनीहरू अवश्य भक्त हुनेछन्। हे राजन् निमी ! जो पुरुष देव, पितृ, ऋषि, गुरु हुन्, उनीहरू पनि यदि भगवान्को शरण जान्छन् भने सबै ऋणबाट मुक्त हुनेछन्। भक्तिमा यही सामर्थ्य छ, सबै ऋण पूरा हुन्छ। भूलवश यदि भक्तबाट कुनै पाप भए पनि भगवान्ले क्षमा गरिदिन्छन्, उसले प्रायश्चित गरिरहन पर्दैन ।'

यसप्रकार नवयोगेश्वरका मुखबाट भगवान्का धर्म आदिको बारेमा सुनी राजा निमी अत्यन्त प्रसन्न भए र षोडशोपचार विधिबाट नवनाथको पूजा गरे । तत्पश्चात् नवनाथ सिद्ध योगेश्वर अन्तर्धान हुनुभयो । उहाँहरूले बताउनुभएको धर्मको पालना गर्दै राजा निमीले आफ्ना कुटुम्बसहित परम गति प्राप्त गरे । ऋषिमुनिहरूले यस्तो देखी आश्चर्य मान्दै अत्यन्त प्रसन्न भई यस्तो सत्सङ्ग त जीवनमा एकक्षणको लागि मात्रै पनि प्राप्त भयो भने अनेकौँ पाप भस्म हुन्छन् भनी सत्सङ्गको महत्त्वलाई प्रकाश पार्नुभयो ।

## नवनाथ स्तोत्रम्

नवनाथहरूको कृपा, आशीर्वाद सहज र सरलरूपबाट प्राप्त गर्नको लागि नवनाथ स्तोत्र आफैमा दिव्य स्तोत्र मानिन्छ । नौवटै नाथहरूको कृपा, आशीर्वाद एकैपटक प्राप्त गर्न सकिने यस स्तोत्रलाई दुर्लभ स्तोत्रको रूपमा लिने गरिन्छ। प्रत्येक नवनाथहरूको लागि केही गर्न सकिएन भने पनि यस स्तोत्रको पाठ गरेर मानिसहरूले उहाँहरूको कृपा, आशीर्वाद प्राप्त गर्न सक्दछन्। सामान्य व्यक्तिहरूलाई दुर्लभ मानिने 'नवनाथस्त्रोत्रम्' अर्थसहित चर्चा गरिएको छ–

**आदेशवस्तुविषयः सुरसिद्धलक्ष्यो**
**यश्चैकनाथ इह सन्नवमूर्ति(पूर्तिः ।**
**सर्वोपरि प्रतिपलं वरिवर्ति कुर्वे**
**कायेन तस्य मनसा वचसा प्रणामम् ।**

जो आदेश वस्तुको विषय छ, त्यो सुर, नर, सिद्धहरूको लक्ष्य हो र एक मात्र नाथ ब्रह्म भएर नवनाथको नवमूर्तिहरूको पूर्ति भएको छ ।

**एकोऽहं बहु स्यां प्रजायेय,** यस्तो इच्छा शक्तिबाट नवनाथको रूपमा अवतरित भएर पनि जो सर्वदा सर्वोपरि वर्तमान छ, यस्ता श्रीनाथको मनसा वाचा कायेन प्रणाम आदेशको रूपमा नमन गर्दछु ।

**मोहान्धकारबिचलन्मनसो मनुष्याः**
**स्वच्वोञ्झितानपि परम्परयोपदेष्टुम् ।**
**तत्त्वं विमुक्तय उताकृत योगशास्त्र–**
**मादेश एतु मम तत्र य अदिनाथः ॥**

तत्त्वले वञ्चित, मोहान्धकारबाट विचलित मन भएका किंकर्तव्यविमूढ मनुष्यलाई पनि मुक्तिको लागि गुरु परम्पराबाट तत्त्वको उपदेश दिनको लागि योगशास्त्र बनाउने आदिनाथ भगवान्लाई मेरो ॐ नमो आदेशको प्रणाम बारम्बार पुगोस् ।

**योह्यादिनाथ उत राघवमत्स्जन्मा**
**मत्स्येन्द्रनाथ इति योगकभोगवृत्तिः ।**
**विस्मापयन्नखिलसिद्धसुरांश्च जात**
**आदेश एतु मम तत्र पवित्रमूर्तौ ॥**

भगवान् आदिनाथ नै स्वयं राघव मत्स्यबाट जन्मनुभएको हो। उहाँ नै अखिल सिद्ध एवं देव, दानव, मानवलाई विस्मित गर्दै योग र भोगवृत्ति हुनुभयो । यस्ता पवित्र पूर्ति अद्वितीय व्यक्तित्वमा मेरो ॐ नमो आदेश जाओस् ।

**यो ह्यादिनाथ उत भोगभरं विहाय**
**योगं सतत्त्वमुदय क्रमतो निनाय ।**
**नाम्ना श्रुतोऽस्त्युदयनाथ इति श्रित श्री**
**रादेश उ्एतु मम तत्र पवित्रमूर्तौ ॥**

स्वयं आदिनाथ नै भोग भारलाई त्याग गरी क्रमशः सत्त्व योगको उदयमा लाग्नुभयो अर्थात् योगको उदय गर्नुभयो र उदयनाथको नामबाट विश्वप्रसिद्ध हुनुभयो । श्री लक्ष्मीले जसको आश्रय लिनुहुन्छ, साथै अष्टसिद्धि, नवनिधिलाई जसले आश्रय दिनुहुन्छ, यस्ता पवित्र मूर्तिमा मेरो ॐ नम आदेश सदैव पुगोस् ।

**यश्चाप्यनेकभवभूतगणान् कृपातः**
**पात्वातिपीडितहृदः किल कालदण्डात् ।**
**तद्दुर्लभामरपदं स सुखं निनाय**
**यद्दण्डनाथ इति सिद्धगणप्रसिद्धः ॥**

जो आदिकाल कालको दण्डको भयबाट अति पीडितलाई कृपा गर्नुहुन्छ, जो विशाल हृदयशाली हुनुहुन्छ, अनेक संसारका भूत प्राणीगणलाई सुरक्षित राखी दुर्लभ अमर पदसम्म सुखपूर्वक लैजाने हुनुहुन्छ, जो दण्डनाथको नामबाट सिद्धगण एवं गन्धर्व, साक्ष्य, यक्ष किन्नर, आदित्य, विश्वदेव, वसु आदि देवगणमा प्रसिद्ध हुनुहुन्छ, उनै पवित्र मूर्तिमा मेरो ॐ नम आदेश पुगोस् ।

**आत्मानमेव सकले य उपादिदेशा**

**त्मन्येव नित्य रमणं किल यस्य यस्मात् ।**
**सत्यप्रवाहक इतो नहि सत्यमन्यत्**
**सत्य स्वरुपइह यत् किल सत्यनाथः ॥**

जो आदिनाथ नै सत्यनाथको रूपमा सकल चराचरमा आत्माको नित्य रमण गर्ने एवं सम्पूर्णलाई आदेश एवं उपदेश गर्ने स्वात्माराम हुनुहुन्छ, 'नहि स्वात्मारामं विषय मृगतृष्णा भ्रमयति' अर्थात् जो सत्य प्रवाहक, संसारमा सत्यको सन्देशवाहक एवं सत्य व्यवहारको हुनुहुन्छ, जसभन्दा पर सत्य छैन, जो सत्यस्वरूप हुनुहुन्छ, यसैले सत्यनाथको नामबाट प्रसिद्ध हुनुहुन्छ, यस्ता पवित्र मूर्तिमा मेरो ॐ नम आदेश सदैव पुगोस् ।

**सत्यस्वरुपकतया सततं ह्यसंग**
**एकान्तिकोपि सततं स्वमुखे पराख्ये ।**
**सन्तोषमादधयं प्रससाद यस्मात्**
**सन्तोषनाथ इति गीयत ईड्यनामा ॥**

जो आदिनाथ नै सत्यनाथीय सत्यस्वरूप हुनाले सदा असङ्ग एवं एकान्तप्रिय, ऐकान्तिक भएर पनि परोख्य स्वसुखमा सन्तोष धारण गर्दै सदासर्वदा प्रसन्न रहनुहुन्छ, जसको महिमा सन्तोषनाथको नामबाट गाइन्छ, यस्ता पवित्र मूर्तिमा मेरो ॐ नम आदेश सदैव पुगोस् ।

**कूर्माभिधानमुपलक्षणमादधानो**
**भूमीमधोभुवनमप्यवतीह यस्मात् ।**
**यः कूर्मनाथ इति शर्मकारे जनाना–**
**मादेश एतु मम तत्र पवित्रमूर्तौ ॥**

कूर्म नामको उपलक्षण धारण गर्दै सत्व पातालसहित भूमिको भार धारण गर्ने र सबै प्रकारका संरक्षण प्रदान गर्ने, समस्त जनतालाई सुख दिने र कूर्मनाथको नामबाट प्रसिद्ध हुनुभएका त्यस्ता पवित्र मूर्तिमा मेरो सदैव ॐ नम आदेश पुगोस् ।

**पुण्यात्मनां विजयतां (त्रिजगतां) किल भुक्ति–मुक्ति**
**दाने पुनः परमतत्त्वनिदेशनाय**
**प्रावर्ततानुगुणयोगमयानुभूतिः**
**येनोत्तमा स च जलन्धरनाथनामा ।**

जो आदिनाथ भगवान् नै तीन लोकका विजयी पुण्यात्माहरूलाई भुक्ति मुक्ति दिनको लागि, पुनश्चः परमतत्त्वको उपदेश दिनको लागि प्रवृत्त हुनुभयो र अनुगुण योगमय उत्तम अनुभूति जसमा प्रवृत्त भएको छ, यस्ता व्यक्तित्व नै जालन्धरनाथको नामबाट प्रसिद्ध हुनुहुन्छ, यस्ता पवित्र मूर्तिमा मेरो ॐ नम आदेश सदैव जाओस् ।

**सर्वे क्षयेण रहिता विहिताश्च येन**
**ये चेतना हि गुणरुपविलक्षणत्वात् ।**

**गोरक्षनाथ इति यः कथितोहि यस्मा–**
**दादेश एतु मम तत्र पवित्रमूर्तौ ॥**

जो आदिनाथ शिवले नै गुरु गोक्षनाथको रूपमा अवतरित भई सबै क्षयरोगी एवं मर्त्यधर्मा मरणशीलहरूलाई योगामृतबाट अजरअमर गरिदिनुभयो, विलक्षण गुण रूपका धनी शिव गोरक्षले नै समस्त प्राणीहरूलाई आफैजस्तै विलक्षण गुण रूपयुक्त बनाउनु भयो र जड वस्तुलाई चेतना दिई चेतनयुक्त बनाउनुभयो, क्षय-प्रलय-कालबाट सबैको रक्षा गर्ने नवनाथ शिव नै गोरक्षनाथको रूपमा पूजित हुनुहुन्छ, यस्ता अद्वितीय पवित्र मूर्तिमा मेरो ॐ नम आदेश सदैव पुगोस् ।

**नवनाथनुर्तिं सततं रचिरां, पठतिह जनः परमादरतः ।**
**पतिोषमुपेत्य स नाथ इतः प्रददाति मनोरथमात्मसुखम् ॥**

जो व्यक्ति यस सुन्दर-रुचि र नवनाथ स्तुथिको परम आदरले निरन्तर पाठ गर्दछन्, उनीहरूबाट नवनाथ प्रसन्न भई उनीहरूको मनोरथ पूर्ण गर्दै उनीहरूलाई आत्मसुख प्रदान गर्नुहुन्छ ।

॥ इति श्रीनवनाथस्तोत्रम् ॥

जय गुरुदेव !

# परमपूज्य सद्‌गुरुदेवको अवतरण यात्रा

*यस स्तम्भअन्तर्गत परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको रहस्य नै रहस्यले भरिएको अवतरण यात्रालाई क्रमशः प्रकाशित गर्दै आएका छौँ । आशा छ यसबाट पाठकवर्ग लाभान्वित हुनुहुनेछ ।*

## जीवन्त जागृत व्यक्तित्व डा. नारायणदत्त श्रीमाली

परमपूज्य सद्‌गुरुदेवले जीवनमा कसरी वास्तविक आनन्द प्राप्ति गर्ने भन्ने मार्गलाई स्पष्ट पार्नुभएको छ । यति मात्रै होइन, ज्ञान, योग अनि वैराग्यको चरम सीमालाई पनि उहाँले स्पष्ट पार्नुभएको छ । जीवनमा जहाँ सङ्गीतले अमृत उत्पन्न गर्दछ, त्यहीँ सौन्दर्य, गति, उमङ्ग र आनन्द प्रदान गर्दछ तथा पूर्णताको भाव र लक्ष्य प्राप्तिको चाहना उत्पन्न गर्दछ । आजभोलि सौन्दर्यको चर्चा उठ्दा कामुकताको मानस बन्ने गर्दछ । प्रेमको चिन्तनमा तुच्छपना सामु आउँछ र हाम्रो मानसमा वासनाले डेरा जमाउँछ । वास्तवमा हामी सबै साह्रै निम्न स्तरका हुन पुग्यौँ (अज्ञानी भयौँ), हाम्रो सोच नै यतिविघ्न अधुरो भयो, हाम्रो आँखामा यति धेरै मैला जमे कि प्रेम अनि सौन्दर्यजस्ता श्रेष्ठ विषयको चिन्तनका चर्चाले हामीमा संकोच उत्पन्न गर्दछ । आजको समाजमा यस विषयमा कुरा गर्नुको अर्थ हो– अश्लील हुनु, फोहरी गफ गर्नु र उत्ताउलो हुनु । सौन्दर्य त जीवनको त्यो अङ्ग हो जसलाई सत्यम्शिवम्सुन्दरम् भनेर आदिसूत्रमा भनिएको छ । अर्थात् सौन्दर्य पनि पूर्णताको एउटा बाटो हो । एकातिर साधना गर्दा गर्दा जीवन सुकेको ठूटोजस्तो कुरूप हुन जान्छ भने अर्कोतिर सौन्दर्यले त्यस सुकेको ठूटोमा शीतलता, शान्ति अनि अघि बढ्ने नयाँ उमङ्ग उत्पन्न गर्दछ । महर्षि भृगुले आफ्नै शब्दमा यसरी स्पष्ट छन्– सिद्धाश्रममा हजारौँ वर्ष आयु भएका योगीहरू भावनाहीन, चेतनाहीनजस्तै समाधिस्थ थिए भने त्यहीँ स्वामी निखिलेश्वरानन्दजीले देवकन्याहरूलाई बोलाई नृत्य, सङ्गीत अनि सौन्दर्यको स्थापना गर्नुभयो । तर सबैले यसको घोर विरोध गरे । निखिलेश्वरानन्दजीले सिद्धाश्रममा सबैलाई मुक्तरूपले विचरण गर्ने छुट दिनुभयो । यसको पनि चर्को विरोध भयो । अनि बल्ल स्थितिलाई स्पष्ट पार्दै उहाँले भन्नुभयो– सौन्दर्य त ऊर्ध्वगामी चिन्तन हो । कामुकता वा वासनामय हुनु अनि आँखामा नराम्रोपना आउनु त पतन पो हो । त्यसकारण संन्यास जीवनमा यी अधोगामी क्रियाहरूको अर्थै छैन । सौन्दर्य प्राप्ति त जीवनको उत्सव हो । परमपूज्य गुरुदेवकै प्रयत्नद्वारा एउटा नयाँ विधान बन्यो । उहाँले भन्नुभएको छ– यदि तिमी कमजोर छैनौ भने, तिमी आफ्नो साधनामा अविचल छौ भने, एकनिष्ठ छौ भने तिमीलाई

आफ्नो साधना भङ्ग हुने डर लाग्ने छैन । यसपछि मसानझैं सुनसान सिद्धाश्रममा हलचल आयो । गुरुजीले स्पष्ट पार्दै भन्नुभयो– सौन्दर्यको पारखी तथा सौन्दर्यमय बन्यौ भने बल्ल तिम्रो जीवनमा आनन्दको वर्षा हुनेछ, उमङ्ग छाउनेछ अनि केही गरेर देखाउने चुनौतिको भाव आउनेछ, साधना मार्गमा अरू खोज हुनेछ, एउटा गति बन्नेछ, जीवनमा सङ्गीतको प्रस्फुटन हुनेछ जसद्वारा अपूर्व वर्षा प्रारम्भ हुनेछ, जीवन नृत्यमय हुनेछ, एउटा उत्सव छाउनेछ । त्यसपछि मात्र पूर्णत्वको प्राप्ति हुनेछ ।

परमपूज्य सद्‌गुरुदेवले हामी सबैको जीवनलाई निरन्तर उत्सवमय नै बनाइरहनुभएको छ । भाग्यवादी मात्रै भएर धेरै पिँढीहरू बिते । हामी भने अब केही नयाँ (परिवर्तित) हुन पाइरहेका छौँ र यो सौभाग्य श्री गुरु चरणको प्रतापले नै भएको हो । नत्र सम्भव नै कहाँ थियो र ?

सम्पूर्ण सृष्टि कालको अधीनमा छ र काल कसैको अधीनमा छैन भन्ने शास्त्रोक्त कथन निखिलेश्वरानन्द परमहंसजी महाराजका शिष्यहरूमा भने लागू हुँदैन । जसले काललाई पनि लात हान्ने हिम्मत गर्नुभयो, जसको अनुमतिबिना काल पनि गतिशील हुने साहस गर्दैन, त्यस्ता कालका पनि महाकाल निखिलेश्वरानन्दजीका शिष्यहरूले चाहेमा के असम्भव छ ? हाम्रा लागि त क्षणभरका लागि मात्रै गुरुदेवको श्रीचरणको चिन्तन गरे पुग्छ ।

यस्ता मातापिता, बन्धुबान्धव, सखासखी, विद्याधन तथा साक्षात् ब्रह्मस्वरूप शिष्यका सर्वस्व प्रात:स्मरणीय परमपूज्य सद्‌गुरुदेव योगीराज स्वामी निखिलेश्वरानन्द परमहंसजी महाराजका श्रीचरणकमलमा साष्टाङ्ग दण्डवत् प्रणाम !

जय गुरुदेव !

जब तिमी मेरो नजिक आएर आफ्नो हृदयको राग मेरो हृदयको रागसँग मिलाइदिन्छौ तब तिमीभित्रको संगीत मेरो संगीतसँग मिल्दछ, दुवै एकैसाथ कम्पित हुन्छन्, धड्कन एक हुन्छ । त्यसपछि तिमीले बुझ्नेछौ त्यो प्रेम, लहर, त्यो गुञ्जन, त्यो गीत जो आनन्द हो, परम आनन्द हो ।

–परमपूज्य सद्‌गुरुदेव डा. नारायणदत्त श्रीमाली

# २०६६ चैत्र महिनाका शुभ समयहरू

| चैत्र १, ८, १५, २२, २९ गते (आइतवार) |
|---|
| सर्वश्रेष्ठ– दिन ६:००–६:४८<br>रात्रि ६:४८–७:३६, ३:३६–४:२४ |
| श्रेष्ठ– दिन ६:४८–१०:००<br>रात्रि ८:२४–१०:००, ४:२४–६:०० |

| चैत्र २, ९, १६, २३, ३० गते (सोमवार) |
|---|
| सर्वश्रेष्ठ– रात्रि ७:३६–९:१२ |
| श्रेष्ठ– दिन ६:००–७:२४, १०:४८–१:१२, ३:३६–५:१२<br>रात्रि ९:१२–१०:००, १:१२–२:४८ |

| चैत्र ३, १०, १७, २४, ३१ गते (मंगलवार) |
|---|
| सर्वश्रेष्ठ– रात्रि ७:३६–९:१२, ३:३६–४:२४ |
| श्रेष्ठ– दिन ६:००–८:२४, १०:००–१२:२४, ४:३६–५:१२<br>रात्रि ९:१२–१०:००, १२:२४–२:००, ४:२४–६:०० |

| चैत्र ४, ११, १८, २५ गते (बुधवार) |
|---|
| सर्वश्रेष्ठ– दिन ३:३६–४:२४<br>रात्रि ९:१२–१०:४८ |
| श्रेष्ठ– दिन ७:३६–९:१२, ४:२४–६:००, ११:३६–१२:००<br>रात्रि ६:४८–९:१२, २:००–६:०० |

| चैत्र ५, १२, १९, २६ गते (बिहीवार) |
|---|
| सर्वश्रेष्ठ– रात्रि ७:३६–९:१२ |
| श्रेष्ठ– दिन ६:००–८:२४, १०:४८–१:१२, ४:२४–६:००<br>रात्रि ९:१२–१०:००, १:१२–२:४८, ४:२६–६:०० |

| चैत्र ६, १३, २०, २७ गते (शुक्रवार) |
|---|
| सर्वश्रेष्ठ– रात्रि १:१२–३:३६ |
| श्रेष्ठ– दिन ६:४८–१०:२४, १२:१२–१:१२, ४:२४–५:१२,<br>रात्रि ८:२४–१०:४८, ४:२४–६:०० |

| चैत्र ७, १४, २१, २८ गते (शनिवार) |
|---|
| श्रेष्ठ– दिन १०:३६–१२:२४, ३:३६–५:१२,<br>रात्रि ८:२४–१०:४८, २:००–३:३६, ४:२४–६:०० |

**नोट**:
**दिन–भन्नाले बिहान ६:०० देखि साँझ ६:०० सम्म**
**रात्रि–भन्नाले साँझ ६:०० देखि अर्को बिहान ६:०० सम्म**

*परमपूज्य सद्‌गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यूद्वारा रचित 'ज्योतिष और काल निर्णय' ग्रन्थमा आधारित ।*

*यस स्तम्भअन्तर्गत परमपूज्य सद्गुरुदेव डा. नारायण दत्त श्रीमालीज्यू (परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज) ले आफ्नो अवतरणकालमा दिनुभएका प्रवचनहरु प्रकाशित गर्दै आइरहेका छौँ ।)*

# क्रियायोगको पूर्णता र सिद्धाश्रम प्राप्ति

.... भित्रको गुंजरण प्रारम्भ हुनेछ सोऽहंको माध्यमबाट । यस आन्तरिक गुंजरणका लागि ओठ खोल्नुपर्दैन । भित्रभित्रै मनन गर्नुपर्छ । यो गुंजरण रोगहरूलाई समाप्त गर्दै पूर्ण समाधि अवस्थामा जाने क्रिया हो । यो आन्तरिक गुंजरण पनि छपटक गर्नुस्, बिस्तारै-बिस्तारै देख्नुहुनेछ– स्वत: सोऽहंको ध्वनि अनवरतरूपले भइरहेको छ । तपाईंमा चेतना नै छैन, हलचल नै नगरी निश्चल बसिरहनुलाई ध्यान भनिन्छ ।

अब यहाँनेर एउटा प्रश्न उठ्छ– यदि ध्यान लाग्यो र एक, दुई घण्टासम्म चेतना फर्केन भने के गर्ने ? यस गुंजरण क्रियाको माध्यमबाट जुन ध्यान लाग्छ, त्यो चौबीस मिनेटभन्दा बढी लाग्नै सक्दैन, त्यो त समाधि अवस्था हो जसमा एक, दुई अथवा दश घण्टासम्म ध्यान लाग्छ ।

तपाईं गुंजरण गरेर हेर्नुस् र दिनभरि तपाईं आनन्द र मस्तीले बिताउनुहुनेछ । कुनै तनाव रहने छैन । कुनै समस्या आउने छैन, तपाईंको दिमाग यति स्वस्थ रहनेछ कि तपाईंले तुरुन्तै निर्णय लिन सक्नुहुनेछ । सँगैको मानिसले प्रश्न गर्दा तपाईंले तुरुन्तै बुझिहाल्नुहुनेछ– प्रश्न के हो र के उत्तर दिनुपर्ने हो । चौबीस मिनेटमा Mind आफसेआफ Relax भइहाल्नेछ । यो धेरै ठूलो कुरा हो । तपाईंको अनुहारमा एउटा ओज, एउटा चमक छाउनेछ, तपाईंले बोल्नेबित्तिकै मानिसहरूमा यस्तो प्रभाव पर्नेछ कि उनीहरूलाई तपाइँमा केही विशेषता छ, कुनै क्षमता त छ भन्ने लाग्नेछ । मानिसले तपाईंको कुरा काट्न सक्दैन । यस्तो तेज यस ध्यानबाट मात्र आउन सक्छ । यो धेरै ठूलो उपलब्धि हो– रोगहरूलाई मेटाउन, शरीरलाई पूर्णता दिन । यो Thoughtless Mind बनाउने प्रत्यक्ष क्रिया हो ।

मैले संक्षेपमा धारणा र ध्यानको प्रक्रिया बुझाएँ । यस ध्यान प्रक्रियाको अभ्यास निरन्तर गर्नुपर्दछ । दिनहुँ गर्नुस् । कहिले गर्ने कहिले नगर्ने, बीच-बीचमा रोक्ने नगर्नुस् । तपाईंले चौबीस मिनेटसम्मै यो ध्यान गर्नुपर्छ भन्ने पनि जरुरी छैन । पाँच मिनेट गर्नुस्, दश मिनेट गर्नुस् अथवा पन्ध्र मिनेट गर्नुस् । तर अवश्यै गर्नुस् । पन्ध्र, बीस दिन अभ्यास गरेपछि तपाईंले यस गुंजरणबाट प्राप्त हुने आनन्दको अनुभूति गर्नुहुनेछ । यो गुंजरण स्वयंमा नै ब्रह्मत्वसँग साक्षात्कारको पहिलो खुड्किलो हो ।

यसको अन्तिम खुड्किलो हो– 'समाधि' जसलाई क्रियायोगको उच्चतम अवस्था भनिन्छ । यी सबै नै क्रियात्मक पक्ष हुन् तर यसको निरन्तर चिन्तन प्रक्रियाका लागि उपकरण त जरुरी हुन्छ नै । यसका लागि धोती चाहिन्छ, उदात्त शंख चाहिन्छ, एकमुखी रुद्राक्ष चाहिन्छ । यी सबै किन चाहिन्छन् भन्ने कुरा प्रयोग गरेर थाहा पाउन सकिन्छ । तपाईं आगो बालेर त्यसको अगाडि बस्नुस् त तपाईंलाई तातो अवश्य हुनेछ । त्यस आगो र आफूबीच शंख राखेर बस्नुस् । अनि तपाईंलाई अनुभूति हुन थाल्नेछ कि मनलाई बाहिरी वातावरणबाट अलग गर्नमा शंख पूर्ण उपयोगी छ ।

यस stage मा जान इच्छुक प्रत्येक साधकले सोऽहं मंत्रको उच्चारण शंखध्वनिको साथमा गर्नु अनिवार्य छ किनभने त्यस वातावरणमा पुगेर संसारबाट अलग्गिनु पर्ने हुन्छ । परीक्षणका लागि एउटा भाँडोमा पानी भर्नुस् जसमा कीटाणु छन्, लामखुट्टे मरेका छन् । त्यस पानीको नजिक बसेर पाँच-छपटक शंख बजाउनुस् र त्यसपछि त्यसलाई test गर्नुस् । त्यसमा आधा जीवाणु समाप्त भइसकेका हुनेछन् । यो त Science को जमाना हो, Science कै हिसाबले हेर्नुस् ।

तपाईंले जसै क्रियायोग पूर्ण गर्नुहुन्छ तब सिद्धाश्रमतर्फ

पहिलो पाइला चाल्नुहुन्छ । त्यसपछि त गुरुको औंलाको सहाराले सिद्धाश्रम पुग्नुछ । त्यही सिद्धाश्रम जसलाई स्वयंमा पूर्णत्वको प्रतीक मानिएको छ । तपाईंले मानवजीवन प्राप्त गर्नुभएको छ भने त्यहाँ पुगेर त हेर्नुस् कि हाम्रो जीवनको उपयोगिता के छ । त्यो हाम्रो जीवनको आनन्द हो, हाम्रो जीवनको पूर्णता हो ।

**क्रिया योग दीक्षा** :

**न्यूनं पूर्णत्व प्राप्नोति, दीक्षा ज्ञानं च यद् भवेत् ।**
**स भवेत् पूर्ण मारोग्यं, सिद्धिर्भवति कर्मजा ॥**

अर्थात् 'संसारमा दुर्लभ र अत्यन्त कठीन प्रक्रियालाई दीक्षा भनिन्छ जुन जीवनमा पूर्णताको प्रतीक हो, मानिसको न्यूनतालाई पूर्णतामा परिवर्तित गर्ने एउटा क्रिया हो जसलाई सिद्धाश्रम दीक्षा भनिन्छ ।'

यस श्लोकका अनुसार पुर्खाहरूको पुण्य र स्वयं आफ्ना जीवनका पुण्यहरूको उदयले मात्र यस्तो अवसर, यस्तो स्थिति उत्पन्न हुन्छ जसको माध्यमले हामी यस्तो दीक्षालाई प्राप्त गर्न सक्छौं र यसैबाट पूर्णता र सफलता प्राप्त गर्न सक्छौं । त्यसैले सिद्धाश्रम दीक्षा दुर्लभ त छँदैछ महत्त्वपूर्ण पनि छ । यस सिद्धाश्रम दीक्षाको महत्त्व यसले पनि छ कि क्रियायोगको समापन सिद्धाश्रम प्रवेशबाटै हुन्छ ।

यस दीक्षालाई गुरुले दिनुहुन्छ जसबाट जीवनमा छिटोभन्दा छिटो धारणा, ध्यान र समाधिको समागम हुन सक्छ । जीवनमा चिन्तन बन्न सक्छ र शिष्यले आफ्नो प्रयत्नले जे कुरा पाउन सकेको छैन, त्यो प्राप्त गर्न सक्छ ।

शिष्य स्वयंमा अपूर्ण हुन्छ किनभने उसका जीवनमार्गहरू अल्झिएका हुन्छन् । ऊसँग स्पष्ट मार्ग हुँदैन, उसलाई यो ज्ञान हुँदैन कि कुन मार्गमा जानुपर्ने हो र कहाँसम्म जानुपर्ने हो । यदि गुरुले उसलाई मार्गमा उभ्याई नै दिए पनि उसलाई त यो थाहा हुँदैन कि यस मार्गमा कतिसम्म जानुपर्ने हो । त्यसैले उसको अगाडि एउटा व्यामोहसमानको स्थिति भई नै रहन्छ । तर गुरुलाई सबै कुरा प्रष्ट हुन्छ, उहाँलाई त यो पनि थाहा हुन्छ कि यो शिष्यको तह हो, ऊ तत्तत् स्थानबाट हिँडेको हो तर अस्पष्टताले गर्दा उसको धारणामा बल पुगेको हुँदैन, दृढता आएको हुँदैन । फलस्वरूप धारणालाई पूर्णरूपमा आत्मसात् गर्न सक्दैन र ध्यान, समाधि, क्रियायोगमा दक्षता पाउन सक्दैन । तैपनि मैले यस प्रवचनमा ती स्थितिहरूलाई सम्झाउने प्रयास गरेको छु जुन स्थितिहरूको माध्यमबाट तपाईं ध्यानलाई, धारणालाई बुझ्न सक्नुहुन्छ ।

यो दीक्षा गुरुले आफ्नो शिष्यलाई तब दिनुहुन्छ जब उसको सेवा र समर्पणलाई आफूमा पूर्णरूपले आत्मसात् गर्नुहुन्छ । जब गुरुलाई यो विश्वास हुन्छ कि शिष्यको सेवा र समर्पणमा कुनै पनि प्रकारको न्यूनता छैन । गुरु उसको सेवाको र समर्पणको परीक्षा लिनुहुन्छ । अब कुनै पनि विषम परिस्थितिले शिष्यलाई मार्गबाट हटाउन सक्दैन भन्ने गुरुलाई पक्का भएपछि मात्र यो दीक्षा गुरुले दिनुहुन्छ ।

भगवान् कृष्ण सांदीपनको आश्रममा बस्दा वनबाट दाउरा काटेर ल्याउँथे, खाना पकाउँथे, गाई चराउँथे । यी सबै काम उनले आफ्नो शिक्षा पूरा नभएसम्म गरे । यो त सेवाको एउटा रूप हो । यद्यपि उनी पूर्ण योगेश्वर थिए, कृष्ण थिए, जन्मँदा पनि ईश्वरको पूर्ण अंश थिए । तैपनि उनले सेवा र समर्पणलाई आत्मसात् गर्नुपर्‍यो । जन्मँदा पुतनालाई मारेर उनले सिद्ध गरे कि उनी सर्वशक्तिमान् छन्, सामर्थ्यवान् युगपुरुष हुन् । उनलाई सांदीपनको आश्रममा यी सबै गर्नुपर्ने आवश्यकता थिएन । तर त्यस Stage सम्म पुग्नलाई यही मात्र मार्ग हो जसलाई सेवा भनिन्छ, जसलाई समर्पण भनिन्छ ।

सांदीपनले कृष्णलाई भने– तिमीले खान पकाउन दाउरा ल्याउनुपर्छ, तिमीले खाना पनि आफै पकाउनुपर्नेछ, पानी परे पनि, जाडो भए पनि अथवा गर्मी भए पनि तिमीले गाई चराउन जानुपर्नेछ । उनले यस्तै गरे । त्यसैले पूर्ण ज्ञान प्राप्त गर्न सके उनले । उनी क्रियायोगको अन्तिम अवस्थामा थिए । त्यसैबेला कृष्ण र गुरुमा एउटा सुन्दर वार्तालाप हुन्छ जसलाई महाभारतमा उद्धृत गरिएको छ । वेदव्यासले अत्यन्तै सुन्दर किसिमले त्यस वार्तालापलाई स्पष्ट गरेका छन् । यस प्रसङ्गमा म ती दुवै चिन्तनहरूलाई तपाईंहरूसमक्ष राख्दैछु–

कृष्ण भन्छन्–

**'विनम्र रुप मदियं गुरुदेव तम्यं'**

'गुरुदेव ! मैले हजूरको सानिध्यमा बसेर यी मंत्र-तन्त्र-यंत्र, योग, मीमांसा, राजनीति र शिक्षा प्राप्त गरेँ । हजूरले मलाई कुण्डलिनी जागरण क्रिया पनि दिनुभयो, हजूरले मलाई क्रियायोगको दीक्षा पनि दिनुभयो, हजूरले मलाई धारणा, ध्यान र समाधिको अवस्थामा पनि पुऱ्याउनुभयो तर पनि रिक्तता अनुभव भइरहेको छ, यस्तो लाग्छ कि मेरो शरीर त बनेको छ तर रित्तो छ र हजूरले यस रित्तो भाँडोमा केही हालिदिनुस् जसबाट म स्वयंमा पूर्णता प्राप्त गर्न सकूँ र यस्तो पूर्णता हजूरको अनुग्रहले मात्र पाउन सकिन्छ जसबाट म सिद्धाश्रम साधनालाई आफूमा समाहित गरेर, त्यस दीक्षामा पूर्णता प्राप्त गर्दै त्यस लोकमा पुग्न सकूँ जसलाई सिद्धाश्रम भनिन्छ ।'

सांदीपनले भने–

**मम पुत्र रुपं शिष्यं वदेयं आत्म स्वरुपं श्रीकृष्ण रुपं ।**
**सिद्धात्मा दिव्य मदैव पूर्ण आशीर्वदे ददितं सः दीक्षा रोपी ॥**

'म तिमीलाई अवश्य सिद्धाश्रम दीक्षा दिनेछु किनकि तिमी मेरा आत्मस्वरूप हौ, मेरा प्राणस्वरूप हौ, मेरा अत्यन्तै प्रिय छौ । मलाई यो पनि थाहा छ कि अरू कसैले तिमीलाई यो दीक्षा दिन सक्दैन । तिम्रो यस रित्तो भाँडोलाई म भर्न सक्छु

किनकि म समर्थ छु । जसै म त्यस रित्तो भाँडोलाई भर्नेछु, तिमीले अवश्यै पनि पूर्णता प्राप्त गर्नेछौ ।"

यदि यति सेवा र समर्पणपछि गुरुले त्यस तथ्यलाई प्रदान गर्नुहुन्छ भने त्यो पनि गुरुको महानता हो । सिद्धाश्रम दीक्षा प्राप्त गरेपछि तपाईंलाई यस्तो लाग्नेछ कि तपाईंका कैयौं पुस्ताको पुण्यको उदय भएर, पूँजीभूत भएर तपाईंसमक्ष उपस्थित भएको छ र यसकै फलस्वरूप तपाईंले यति महान् उच्चकोटिको दीक्षा पाउनुभयो ।

यो सिद्धाश्रम दीक्षा दुई चरणमा दिइन्छ । एउटा यसको पूर्वार्द्ध चिन्तन र अर्को उत्तरार्द्ध चिन्तन छन् । दुवै रूपमा मिलेर नै यो दीक्षाले स्वयमेव पूर्णता प्रदान गर्दछ । जुन स्थानमा यसको पूर्वार्द्ध चिन्तन आवश्यक हुन्छ, त्यसमा उत्तरार्द्ध चिन्तन पनि आवश्यक हुन्छ । गुरुले पहिले यसको पूर्वार्द्ध दीक्षा दिनुहुन्छ र पूर्वार्द्ध दीक्षापछि शिष्यको चिन्तन महसुस गर्नुहुन्छ । सर्वप्रथम अनुभव गर्नुहुन्छ अनि शिष्यको चिन्तन र मननलाई अनुभव गरेर नै यो अनुभूति गर्नुहुन्छ कि उत्तरार्द्ध दीक्षा दिने समय भयो कि भएन ।

यी दुवै दीक्षाको मध्यमबाट शिष्यको भावना कतिको स्पष्ट छ, स्वयंमा कतिको समर्थ छ, गुरुले उसलाई जाँच्नुहुन्छ । पूर्वार्द्धबाट नै शिष्य पूर्णरूपले सामर्थ्यवान् भइहाल्छ । उत्तरार्द्धमा धारणा, ध्यान र समाधिलाई पूर्णरूपले शिष्यको सम्पूर्ण शरीरमा समायोजित गरिन्छ । त्यसैले उत्तरार्द्ध झन् महत्त्वपूर्ण छ । पूर्वार्द्धमा ज्ञान लिनका लागि उसको घट तयार हुन्छ भने उत्तरार्द्धमा त्यस घटलाई पूरै भरिन्छ ।

कृष्णले बुझेका थिए कि आफ्नो पूरै पात्र रित्तो छ, सांदीपनले उनलाई यत्तिका दिँदा पनि उनी खल्लो अनुभव गरिरहेका छन् ।

यो रित्तोपनाको अनुभूति त्यस स्थितिको द्योतक हो जहाँ गुरूप्रति पूर्ण चिन्तन र मनन हुन थाल्छ, उहाँप्रति पूर्ण समर्पण र साधना हुन्छ ।

जस्तो कि मैले भनें कि यो पूर्वार्द्ध स्वयंमा आफ्नो शरीरलाई पात्र बनाएर भर्ने क्रियाको आधार हो ।

सुपात्र बन्नु ज्यादै कठीन छ किनभने यो शरीर छल, कपट र झूटले भरिएको छ र यसलाई रित्तो पार्न ज्यादै कठीन छ । तसर्थ यस महत्त्वपूर्ण चिन्तनका लागि तपाईंहरू तयार हुनुपर्छ, यो अत्यावश्यक छ ।

सिद्धाश्रम साधनामा यस शरीरलाई पूर्ण वायवीय (हल्का) बनाउने क्रिया प्राप्त हुन्छ जसको माध्यमले व्यक्ति आफ्नो सूक्ष्म मनलाई सिद्धाश्रममा लग्न सकोस् अथवा वायवीय दृष्टिले अथवा वायुद्वारा आफ्नो शरीरलाई सिद्धाश्रम लग्न सक्ने सामर्थ्य प्राप्त गर्न सकोस् । यसका लागि पूर्वार्द्धमा यज्ञोपवीत संस्कार र समस्त देवीदेवताहरूलाई आफ्नो शरीरमा स्थापना गरेर मात्र सिद्धाश्रम साधना दिइन्छ, त्यसपछि मात्र उत्तरार्द्ध दीक्षा दिइन्छ ।

**पूर्णं पूर्णविदैरुप मचलं ज्ञानं च दिव्याम्बरं,**
**आत्मं दै परमं परेश परितं क्रियायोग मे वाचतं ।**
**सिद्धं स सवितां सहेव परितं गुंजन्मितां दीर्घतां,**
**व्यामोहं करतं परेश परितं सिद्धाश्रमो वै नमः ॥**

यो एउटा यस्तो दीक्षा हो जसको प्रतीक्षा देवता, मानव, ऋषि र गन्धर्व सबैले गर्दछन्, त्यो क्षण अत्यन्तै सौभाग्यदायक हुन्छ जब यो विशिष्ट दीक्षा प्राप्त हुन्छ जसलाई क्रियायोग दीक्षा तथा यसैलाई प्रारम्भिक सिद्धाश्रम दीक्षा पनि भनिन्छ ।

तपाईंलाई यो दीक्षा प्राप्त होस् । मानिस आफ्नो ऊर्ध्वगामी प्रवृत्तिबाट माथि उठेर सम्पूर्ण देश र विश्वको नेतृत्व गर्दै, मार्गदर्शन गर्दै आफ्नो पुर्खाको पुण्यलाई समयपटमा लेखेर सम्पूर्ण विश्वलाई बताउँदै त्यस यशलाई प्राप्त गरोस् जसले समस्त पुर्खाको अनुहारलाई चम्काओस् । यो सबैभन्दा ठूलो सौभाग्य हो । यस्तै यशको सहभागी तपाईं बन्नुहोस्, अनि मात्र तपाईंको मानवजीवन सफल हुनेछ ।

मैले पछिल्ला पृष्ठहरूमा क्रियायोगजस्तो अत्यन्तै जटिल र संवेदनशील विषयलाई जति सरलताले सम्झाउने प्रयास गर्न चाहेको थिएँ, त्यो मैले गरेँ । यसअन्तर्गत मैले बताएँ कि जीवनमा दुई प्रवृत्तिहरू छन्– ऊर्ध्वगामी प्रवृत्ति र अधोगामी प्रवृत्ति ।

नाइटोभन्दा तलका जति पनि प्रवृत्तिहरू छन्, तिनीहरूका माध्यमले मायाको निर्माण हुन्छ– छोरा हुन्छ, नाति हुन्छ, स्वास्नी, बन्धुवान्धव यी सबैको सम्बन्ध नाइटोभन्दा मुनिका प्रवृत्तिहरूको संचालनबाट छन् । नाइटोभन्दा माथिका जति पनि चक्र छन्, जति पनि प्रवृत्तिहरू छन्, ती प्रवृत्तिहरूलाई जाग्रत गर्नु, उत्तेजित गर्नु, ती प्रवृत्तिहरूलाई माथि उठाउनु मानवजीवनको लक्ष हो । ऊर्ध्वगामी प्रवृत्ति जीवनको पूर्णताको प्रतीक हो । नाइटोमुनिका प्रवृत्तिहरूले मृत्युतर्फ अग्रसर गर्छन् र नाइटोमाथिका प्रवृत्तिहरूले अमरतातिर अग्रसर गराउँछन् । नाइटोमुनिका प्रवृत्तिहरूले आलोचना, अपयश, निन्दा, प्रशंसा, मोह, व्यामोहजस्ता बाधा तथा विशेषताहरूलाई जन्माउँछन् र अधोगामी प्रवृत्तिहरूले जीवनमा पूर्णता दिन्छन्, सुख दिन्छन्, सन्तोष दिन्छन् तथा जीवनको त्यस आयामलाई स्पर्श गराउने क्रिया गराउँछन् जसलाई गुंजरण भनिन्छ ।

जसरी एउटा फूललाई देखेर भमरा सधैं गुन्जिन्छ, जसरी समुद्रमा नदीहरू कलकल स्वरको गुंजरण गर्दै अगाडि बढ्छन्, त्यसरी नै व्यक्ति ती ऊर्ध्वगामी प्रवृत्तिहरूको गुंजरण गर्दै सिद्धाश्रमतर्फ अग्रसर हुन्छ जुन जीवनको पूर्णता हो ।

**– पूज्यपाद सद्‌गुरुदेव डा. नारायणदत्त श्रीमाली**

# उपचार विधि

धारावाहिक अभ्यास भाग ५

पहिलो ध्यानको पाँचौं विधिको रूपमा उपचार विधि रहेको छ । उपचार विधि भन्नाले यस ध्यान विधिको अभ्यासपछि हामी उपचार पनि गर्न सक्दछौं । ध्यानको माध्यमबाट शक्ति उत्पादन गरी त्यसलाई उपचारको रूपमा प्रयोग गर्न सकिन्छ । व्यक्ति आफूले आफैलाई पनि उपचार गर्न सक्दछन् भने अरूलाई पनि उपचार गर्न सकिन्छ ।

उपचार विधि भएकोले यस विधिमा हामी सोऽहं प्रक्रियालाई पनि अपनाउँछौं अनि Colour Meditation र ॐकार ध्यान पनि गरिन्छ ।

सोऽहं विधिबाट हामीले भित्रका अङ्गहरूलाई क्रियाशील बनाउँछौं अनि ॐकारको उच्चारण र पहेँलो रङको ध्यान गर्ने गरिन्छ ।

पहेँलो रङ उपचारको लागि राम्रो रङ मानिन्छ । यो आफैमा दैवी रङ पनि हो । हुन त बाहिरीरूपमा पनि पहेँलो रङले हामीलाई शान्ति, आनन्द, खुशी प्रदान गरिरहेको हुन्छ । पहेँलो रङ पूर्णताको प्रतीक पनि मानिन्छ । अन्न, अनाज, फलफूल आदि पहेँलो रङमा नै पूर्ण भएको पाउँछौं अर्थात् अनाज, फलफूल आदि पहेँलो रङमा परिणत भएपछि पाक्दछन् अनि प्रयोगको लागि लायक हुन्छन् । पहेँलो रङ पूर्णताको प्रतीक, शान्ति र आनन्दको रङ भएकोले पनि यही रङको प्राप्ति व्यक्तिको लक्ष्य हुन्छ । आध्यात्मिकरूपमा अगाडि बढ्नेहरूका लागि पहेँलो रङले ठूलो सहयोग गरिरहेको हुन्छ । पहेँलो रङ उन्नति, प्रगति गराउने, उच्चतामा प्रवेश गराउने रङ हो ।

पहेँलो रङको ध्यान गर्दा अर्थात् पहेँलो रङको मात्रा शरीरमा बढाउन सक्दा व्यक्तिको इच्छाशक्ति (Will Power) ले अरूलाई समेत प्रभाव पारी शान्ति, आनन्द प्रदान गर्दै relief गराउन सक्दछ । उपचार गर्नेहरूसँग पहेँलो रङको मात्रा बढी हुन्छ । त्यसैले हामी जहाँ उपचार गराउन जान्छौं, त्यहाँ एक किसिमको विश्वासको वातावरण बनिराखेको हुन्छ अनि हाम्रो रोग ठीक हुने गर्दछ । रङको विराट् संसारको चर्चा यहाँ सम्भव छैन तैपनि हामीले रङको यथार्थ एवं गूढ रहस्यलाई बुझेर जीवनमा उतार्न सक्यौं भने हाम्रो कल्याण हुनेछ र अरूलाई पनि कल्याण गर्न सकिनेछ । आउनुहोस्, ध्यानको पाँचौं विधि अर्थात् उपचार विधिको प्रयोगात्मक अभ्यासतर्फ लागौं ।

## तरीका :

१. अनुकूल मिल्ने वस्त्र लगाउने, भएमा सल, मालाहरू

लगाउने ।

२. धेरै समय बस्दा अप्ठ्यारो लाग्ने आसनमा नबसी सजिलो लाग्ने, अनुकूल हुने सुखासन, अर्धपद्मासन वा अन्य आसनमा बस्न सकिनेछ ।

३. आफ्नो अगाडि गुरुहरूको फोटो वा आफूले मानीआएका देवीदेवता वा इष्टहरूको फोटो राख्ने अगरबत्ती बाल्ने, अनुकूल भए दीयो बाल्ने ।

४. सहस्रारमा परमपूज्य सद्गुरुदेवहरू श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजलाई गुरुरूपमा धारण गर्ने, हृदयमा आफूले मानेका देवीदेवताहरूलाई धारण गर्ने ।

५. तीनपटक ॐकार गर्ने र तलको श्लोक तीनपटक उच्चारण गर्ने–

**"गुरुर्ब्रह्मा गुरुर्विष्णुः गुरुर्देवो महेश्वरः**
**गुरुः साक्षात् परब्रह्म तस्मै श्री गुरवे नमः ॥"**

६. त्यसपछि दुवै हात रगडेर आँखा सेक्ने र आफ्नो अगाडि ढोगिदिने ।

७. सोऽहं तीनपटक गर्ने– ढाड सीधा राख्ने, दुवै हात दुवै घुँडामा राख्ने अनि दुवै नाकको प्वालबाट लामो श्वास तान्ने । श्वास तान्दा 'सो' अनि श्वास फाल्दा 'हं' गर्ने । यसरी तान्ने र फाल्ने क्रमलाई बिस्तारै छिटोछिटो गर्ने अनि अलि कम गर्दै रोक्ने । लगभग एक मिनेटभित्र एक चरण पूरा हुन्छ । अनि पाँच सेकेण्ड जति आराम गर्ने र फेरि अघिजस्तै श्वास तान्ने । तान्दा 'सो' र फाल्दा 'हं' गर्ने । यस्तो तीनपटकसम्म गर्ने ।

८. सोऽहं विधि तीनपटक गरिसकेपछि २१ पटक ॐ कार

उच्चारण गर्ने ।

९. २१ पटक ॐ उच्चारणपछि आज्ञाचक्र Third eye मा पहेँलो रङ (Yellow colour) सम्झेर ध्यान गर्ने ।

१०. आफ्नो अनुकूलतानुसार १५ मिनेटदेखि ३०, ४५, ६० मिनेटसम्म गर्न सकिनेछ ।

११. तीनपटक ॐकार उच्चारण गर्ने ।

१२. तीनपटक तलको श्लोक उच्चारण गरेर भन्ने–

**"गुरुर्ब्रह्मा गुरुर्विष्णुः गुरुर्देवो महेश्वरः**
**गुरुः साक्षात् परब्रह्म तस्मै श्री गुरवे नमः ॥"**

१३. दुवै हात रगडेर शिरमा सेक्ने, आँखामा सेक्ने, घाँटीमा सेक्ने, छातीमा सेक्ने, नाभिमा सेक्ने, पुनः दुवै हात रगडेर आँखा सेक्ने, आफ्नो हत्केला हेर्दै अगाडि ढोगिदिने ।

**नोटः**

सोऽहं गर्दा रक्तचाप उच्च र निम्न हुनेले, छातीसम्बन्धी रोग हुनेले, दमको रोग हुनेले ज्यादा गर्नु हुँदैन । महिलाहरूको हकमा महिनावारी हुँदा चार दिनसम्म सोऽहं गर्नु हुँदैन ।

**उपचार गर्ने तरीका :**

यो ध्यानको विधि २१ दिनसम्म अभ्यास गरेपछि उपचारमा यस विधिलाई प्रयोग गर्न सकिनेछ । आफैलाई अथवा अरूलाई उपचार गर्नुपऱ्यो भने पहिले गुरुहरूलाई प्रार्थना गर्ने अनि दुवै हात रगड्ने, तातो हुन्छ अनि दुःखेको ठाउँमा लगभग २/३ मिनेट राख्ने र पहेँलो रङको शक्ति गइरहेको स्मरण गर्ने ।

जय गुरुदेव !

ध्यानसम्बन्धी विस्तृत जानकारीको लागि **ध्यानामृत** तथा **मुद्रामृत ध्यान** पुस्तक खोजी-खोजी पढौं ।

# ध्यान! ध्यान!! ध्यान!!!

**तान्त्रिक ध्यानका प्रथम चरण, दोस्रो चरण, तेस्रो चरणका कक्षाहरू धमाधम सञ्चालन भइरहेका छन् । आजै नाम लेखाई आफ्नो स्थान सुरक्षित राख्नुहोला ।**

**प्रथम चरण**– गोरक्ष निखिल वाणी पत्रिकाका सम्पूर्ण सदस्यहरुका लागि खुला । **दोस्रो चरण**– प्रथम चरणको ध्यान सम्पन्न गरिसक्ने साधक साधिकाहरुका लागि । **तेस्रो चरण**– दोस्रो चरणको ध्यान सम्पन्न गरिसक्ने साधक साधिकाहरुका लागि ।

बाँकी कुरा सिद्धाश्रम शक्ति केन्द्रका सम्पर्क कार्यालयहरुबाट बुझ्न सक्नुहुनेछ ।

**हाल ध्यान सञ्चालन भइरहेका र निकट भविष्यमा हुने स्थानहरू–**

बसुन्धरा (काठमाडौँ), कटुञ्जे (भक्तपुर), लगनखेल (ललितपुर), बनेपा (काभ्रे), पोखरा रामघाट, विन्ध्यवासिनी, लेखनाथ बडहरे (कास्की), गोरखा बजार, लक्ष्मीबजार (गोरखा), बाह्रबिसे (सिन्धुपाल्चोक), तनहुँ ।

# ध्यान साधनामा गुरुको महत्त्व

ध्यान साधनामा अगाडि बढ्नलाई मात्र होइन, समस्त प्राणीका लागि नै गुरु अति आवश्यक एवं अपरिहार्य हुन्छ । संसारका सम्पूर्ण शक्तिहरूमा गरिमामय स्थानमा विराजमान गुरु शब्द आफैमा दिव्यतम छ, पवित्र छ । गुरु शब्दको महिमा, उच्चता न त शब्दको वर्णनमा सम्भव त, न त कुनै शास्त्रको व्याख्याभित्र । गुरु शब्दको पवित्रता आफैमा अनुपम छ, अद्वितीय छ ।

गुरु शब्द हाम्रो समाजमा नौलो नभए पनि यसको गूढतम रहस्य एवं गरिमामय उच्चताको बारेमा हाम्रो समाज अनभिज्ञ नै छ । यसैले पनि आज गुरु शब्दको अपहेलना भएको छ, अनादर भएको छ । गुरु शब्द समाजका व्यक्तिलाई उडाउने, उल्याउने, हँसी-मजाक गर्ने शब्दको पर्याय बनेको छ । कति दुःखलाग्दो कुरा ! जसले संसारका व्यक्तिलाई तार्ने क्षमता राख्नुहुन्छ, त्यस्ता दिव्यतम व्यक्तित्वलाई मात्र गुरु पदले विभूषित गरिन्छ, गुरु शब्दले सम्बोधन गरिन्छ । गुरु शब्द प्राचीनकालदेखि नै अत्यन्त दिव्य भएको र यसको उच्चारण केवल दिव्यतम व्यक्तित्वका साक्षात् प्रतिमूर्तिहरूलाई मात्रै गरिन्थ्यो । जसले मानवलाई सांसारिक भवसागरबाट तार्न सक्नुहुन्छ, जसले अन्धकाररूपी मनुष्यको जीवनलाई वास्तविक गन्तव्य एवं ज्ञानरूपी उज्यालोतर्फ उन्मुख गराउनुहुन्छ, आध्यात्मिक गूढ रहस्यलाई उजागर गराउनुहुन्छ र आफैमा तत्त्ववेत्ता हुनुहुन्छ, त्यस्ता व्यक्ति मात्र गुरु हुनुहुन्छ, त्यस्ता दिव्यतम व्यक्ति, व्यक्तित्वलाई मात्र गुरु शब्दले पुकारिन्छ, श्रद्धा गरिन्छ । यस गूढ कुरालाई तपाईं हामीले पनि बुझ्नुपर्दछ ।

समाजका व्यक्तिहरूले गुरु शब्दको गरिमामय पदलाई नबुझी कसैले आफूले आफैलाई गुरु घोषणा गर्दछन्, कसैले गुरु पदले सम्मान गर्दछन् । संस्कृत बोल्न जान्दैमा, विद्वान् हुँदैमा, प्रवचन दिन सक्दैमा, सामान्य मन्त्र-तन्त्र जान्दैमा, दुई-चारवटा साधना सिद्ध गर्दैमा, सिद्धि प्राप्त गर्दैमा, पहेँलो लुगा, माला, सल लगाउँदैमा, जोगी बन्दैमा, संन्यासी बनेर हिँड्दैमा, ज्योतिष जान्दैमा, पूजाआजा गराउन सक्दैमा, राम कथा, भागवत् कथा आदि राम्रोसँग भन्दैमा, पूजन गराउँदैमा आदि इत्यादि क्षमता, सामर्थ्य हासिल गर्दैमा कोही गुरु पनि बन्दैन, गुरु भन्न पनि मिल्दैन । तर पनि आजको समयको विडम्बनाले पनि हुन सक्छ, क्षमतावान दिव्यतम व्यक्तित्वको अभावमा माथि उल्लेख भएजस्तै समान्य व्यक्तिले पनि आफूलाई गुरु पदमा आसीन गराई सीधासाधा समाजका अज्ञानी मानिसहरूलाई शिष्य बनाई मानसिक एवं शारीरिक शोषण गरेको पाउँछौं । नाम मात्रका गुरुले न अध्यात्मका गूढ कुरा बुझाउन सक्छन्, न त धर्म र धार्मिकताका मूल तत्त्वलाई बुझाउन सक्छन्, न त तपस्याभित्रको वास्तविक रहस्यलाई नै उजागर गर्न सक्छन् । यसैले गुरु मान्दा, गुरु स्थापना गर्दा दिव्यतम व्यक्तित्वलाई मात्रै गुरु मान्नुपर्दछ । शिवस्वरूपका गुरुहरूले मात्रै वास्तविकरूपमा मनुष्यलाई मोक्ष दिन सक्नुहुन्छ । शास्त्रमा गुरुलाई सर्वोपरि मानिएको छ । गुरु नै सृष्टि गर्न सक्ने ब्रह्माण्डस्वरूप हुनुहुन्छ, सृष्टिलाई व्यवस्थित गर्ने, चलाउने विष्णुस्वरूप हुनुहुन्छ र सृष्टिलाई संहार गर्ने महेश्वर हुनुहुन्छ । त्यतिमात्रै होइन, सारा संसारलाई आफ्नो इशारामा चलाउन सक्ने साक्षात् परब्रह्म हुनुहुन्छ । त्यसैले यस्ता अद्वितीय व्यक्तित्वलाई मात्रै हामीले गुरु मान्नुपर्दछ ।

साधक, साधिका एवं शिष्यका प्राणाधार नै गुरु हुनुहुन्छ । गुरु नै सर्वस्व हुनुहुन्छ । त्यसैले ध्यान साधनालगायत जुनसुकै क्षेत्रमा सफलता प्राप्त गर्न गुरुको नै कृपा, आशीर्वाद चाहिन्छ । त्यसैले, गुरुको कृपाबिना न त साधना सफल हुन्छ, न त मानवजीवन नै सफल हुन्छ । त्यसैले, ध्यान साधनामा सफलता चाहने प्रत्येक व्यक्तिको पहिलो कार्य नै गुरु प्राप्ति हो । सबैभन्दा पहिले गुरु प्राप्त गर्ने, गुरुसँग जोडिने, तत्पश्चात् गुरुकै निर्देशनअनुरूप ध्यानमा अगाडि बढ्नुपर्छ । गुरु सत्ता देवीदेवता एवं ऋषिहरूका लागि समेत उच्च आदरणीय सत्ताको रूपमा विराजमान रहनुभएको छ । यसरी देवहरूका लागि पनि दुर्लभ मानिने, ऋषिहरूका लागि पनि परम वन्दनीय रहने गुरु सत्ता परम आदरणीय हुनुहुन्छ, परम वन्दनीय हुनुहुन्छ । यस्तो दिव्यतम सत्ताको सधैं कदर गर्नुपर्दछ, आदर गर्नुपर्दछ र खुशी बनाई कृपा, आशीर्वाद प्राप्त गर्नुपर्दछ ।

जो गुरु मानेर ध्यानमा अगाडि बढ्छन्, त्यस्ता व्यक्तिहरूलाई नै देवीदेवताले पनि कृपा, आशीर्वाद दिन्छन् र ध्यान सफल हुन्छ । गुरु मानेर अगाडि बढ्दा केही तल-माथि परेमा गुरुदेवले हेरिदिनुहुन्छ, सामान्य त्रुटि, कमी-कमजोरीलाई क्षमा गरिदिनुहुन्छ । देवीदेवताहरू रिसाएर कृपा, आशीर्वाद नदिने स्थिति भयो भने पनि गुरुलाई खुशी बनाउन सकियो भने देवताहरू स्वतः नै खुशी हुन्छन् र ध्यान सफल हुन्छ । त्यस्तै ऋषिहरू पनि रुष्ट हुनुभयो भने गुरु खुशी हुँदा, गुरुलाई पूर्ण आदर-सम्मान गर्दा उहाँहरूलाई पनि खुशी बनाउन सकिन्छ र ध्यान सफल हुन्छ ।

स्मरण रहोस्, यदि गुरुलाई नै रुष्ट बनायौं, गुरुलाई अनादर गर्‍यौं भने फेरि गुरु खुशी बनाउने उपाय यस संसारमा अर्को कुनै दिव्यशक्ति हुँदैन । केवल श्रापको भागीदार बन्नुपर्ने हुन्छ । त्यसैले गुरु मानौं, गुरुसँग जोडिऔं, गुरुकै मार्गनिर्देशनअनुसार अगाडि बढौं, गुरु सत्तालाई पूर्ण आदर, सम्मान गरौं र ध्यानमा सफलता प्राप्त गरौं । जय गुरुदेव !

*यस स्तम्भअन्तर्गत हस्तरेखा विज्ञानअनुसार हस्तरेखासम्बन्धी जानकारीहरु पाठकवर्गसमक्ष राख्दै आइरहेका छौँ। आशा छ, यसबाट यहाँहरु लाभान्वित हुनुहुनेछ।*



# आफ्नो हात आफै हेरौँ

## मस्तिष्क रेखा *अघिल्लो अंकबाट क्रमशः*

२२. यदि हातमा दोहोरो मस्तिष्क रेखा देखिएमा अर्थात् मस्तिष्क रेखाको साथसाथै त्यसका सहायक रेखाहरू पनि निस्किएका छन् भने त्यस्तो व्यक्ति अत्यन्त भाग्यवान् मानिन्छ।

२३. यदि दोहोरो मस्तिष्क रेखा सीधा र सफा भएमा निश्चय नै यस्तो व्यक्तिले कूटनीतिमा पूर्ण सफलता प्राप्त गर्दछ।

२४. मस्तिष्क रेखा यदि बीचमा टुटेको देखिएमा त्यस्तो व्यक्तिको मस्तिष्क असन्तुलित हुन्छ।

२५. यदि मस्तिष्क रेखा गुरु पर्वतको ठीक तल खण्डित भएको छ भने त्यस्तो व्यक्तिलाई बाल्यावस्थामा नै भयङ्कर चोट लाग्दछ। यसैप्रकार यदि यो रेखा शनि पर्वतमुनि टुटेको देखिएमा २४ वर्षमा शस्त्राघातको योग बन्दछ।

२६. मस्तिष्क रेखा सूर्य पर्वतमुनि भङ्ग भएको खण्डमा व्यक्तिले आफ्नो पेशामा धेरै बदनामीको सामना गर्नुपर्दछ। यदि यस्तो रेखा बुध पर्वतमुनि गएर टुट्दछ भने त्यस्तो व्यक्ति व्यापारमा टाट पल्टन्छ।

२७. यदि मस्तिष्क रेखा जञ्जीरजस्तै छ भने उसको जीवनमा मस्तिष्कसम्बन्धी रोग रहन्छ।

२८. यदि गुरु पर्वतको मुनि मस्तिष्क रेखामा कुनै प्रकारको द्वीप छ भने त्यो व्यक्ति पागल हुन्छ।

२९. शनि पर्वतको मुनि मस्तिष्क रेखामा द्वीप छ भने २४ औँ वर्षमा पागलखानामा जानुपर्ने हुन्छ।

३०. यदि सूर्य पर्वतको मुनि मस्तिष्क रेखामा कुनै प्रकारको द्वीप देखा पर्छ भने त्यो व्यक्ति सबै प्रकारले असफल हुन्छ।

३१. यदि बुध पर्वतमुनि मस्तिष्क रेखामा द्वीप बनेको भए त्यस व्यक्तिको विस्फोटको कारण मृत्यु हुन्छ।

३२. यदि मस्तिष्क रेखा बीच बीचमा काटिएको छ भने व्यक्तिको दिमाग असन्तुलित हुन्छ।

३३. यदि मस्तिष्क रेखाको आसपासमा सानाठूला रेखाहरू देखिए भने व्यक्ति अस्थिर निर्णय लिने वाला हुन्छ।

३४. मस्तिष्क रेखा घुमेर शुक्र पर्वततिर जान्छ भने व्यक्तिले उन्नति गर्दछ र स्त्रीको अत्यधिक लोकप्रिय हुन्छ।

३५. मस्तिष्क रेखामा सेता बिन्दुहरू देखिए भने त्यस व्यक्तिको जीवन पूर्ण सफलताले युक्त हुन्छ।

३६. मस्तिष्क रेखामा काला बिन्दुहरू देखिए भने त्यो व्यक्ति विकृत मस्तिष्क वाला हुन्छ।

३७. यस रेखामा क्रस चिह्नहरू देखिए भने व्यक्तिको दुर्घटनामा मृत्यु हुन्छ।

३८. यस रेखामा नक्षत्रका चिह्नहरू देखिन्छन् भने त्यस व्यक्तिको जीवनमा गहिरो चोट लाग्दछ।

३९. यदि यस रेखामा गोलाकार चिह्न देखियो भने त्यो व्यक्ति अदूरदर्शी र मूर्ख हुन्छ भन्ने मान्नुपर्छ।

४०. यस रेखामा त्रिकोणका चिह्नहरू देखिएमा व्यक्तिको जीवनमा भयङ्कर हानि हुन सक्दछ।

४१. यदि औंलाहरू लामा छन् र मस्तिष्क रेखा पनि सीधा र स्पष्ट छ भने त्यो व्यक्ति सूक्ष्मदर्शी र बुद्धिमान् हुन्छ ।

४२. यदि औंलाहरू छोटा छन् तर मस्तिष्क रेखा स्पष्ट छ भने व्यक्तिको जीवन प्रगतियुक्त हुन्छ ।

४३. यदि सबै पर्वतहरू स्पष्ट छन् र मस्तिष्क रेखा पनि सीधा र स्पष्ट छ भने व्यक्तिले निश्चय पनि आफ्नो प्रयत्नले जीवनमा सफलता प्राप्त गर्दछ ।

४४. हातमा तीखा औंलाहरू छन् र मस्तिष्क रेखा सीधा देखिन्छ भने व्यक्ति बुद्धिमान् हुन्छ ।

४५. हृदय रेखा तथा जीवन रेखाको अन्तिम भागतिर त्रिकोणको चिह्न छ भने त्यो व्यक्ति शुभ मानिन्छ ।

४६. यदि मस्तिष्क रेखा हत्केलाको वारपार गएको देखिन्छ भने व्यक्तिको स्मरणशक्ति अत्यन्त तीब्र हुन्छ र जीवनमा मेधावी पनि हुन्छ ।

४७. हृदय रेखा बटारिएको छ भने व्यक्तिलाई शिरको रोग बराबर भइरहन्छ ।

४८. यदि औंलाहरू छोटा छन् तर साथमा मस्तिष्क रेखा हल्का छ भने व्यक्ति आफ्नो मूर्खताले गर्दा टाट पल्टन्छ ।

४९. यदि बुध पर्वत विकसित छ तर मस्तिष्क रेखा कमजोर छ भने व्यक्तिले जीवनमा धेरै विश्वासघात सहनुपर्ने हुन्छ ।

५०. यदि चौडा हत्केला छन् र सूर्य पर्वत कमजोर छ तर मस्तिष्क रेखा स्पष्ट छ भने व्यक्ति जीवनमा सफल हुँदैन ।

५१. हृदय रेखा पातलो छ भने मानसिक दुर्बलताको सङ्केत हो यो ।

५२. मस्तिस्क रेखामा छोटाछोटा द्वीपहरू देखिन्छन् भने व्यक्तिको सन्निपातको अवस्थामा मृत्यु हुन्छ ।

५३. यदि मस्तिष्क रेखा टेढोमेढो छ भने व्यक्ति संकुचित विचारधाराको हुन्छ ।

५४. हृदयरेखा कमजोर छ र मस्तिष्क रेखा स्पष्ट छ भने व्यक्तिले जीवनमा क्षयरोगको सामना गर्नुपर्ने हुन्छ ।

५५. यदि जीवन रेखा माथिबाट शुरु भएर अगाडि बढेको छ र साथै धेरै छोटामोटा रेखाहरू देखा पर्दछन् भने व्यक्ति अत्यन्त शक्तिशालीयुक्त हुन्छ ।

५६. यदि यस रेखाको अन्तमा चतुर्भुज देखिन्छ भने व्यक्ति विदेशमा सफलता प्राप्त गर्दछ ।

५७. यदि गुरु एवं मङ्गल पर्वत विकसित छ र मस्तिष्क रेखा स्पष्ट छ भने व्यक्ति असाधारण आत्मविश्वास र प्रबल इच्छाशक्तियुक्त हुन्छ ।

५८. यदि मस्तिष्क रेखा बूढी औंलाको नजिकै भएर गएको छ भने उसको आयु धेरै कम हुन्छ ।

५९. यो यदि रेखा हृदय रेखातिर बढेको छ र रेखा बीच बीचमा धेरै ठाउँमा काटिएको छ भने व्यक्तिको जीवनमा मृगी रोग देखा पर्दछ ।

६०. यदि यो रेखा जीवन रेखाको सँगसँगै अगाडि बढ्दछ भने प्रेममा विश्वासघात भएर व्यक्तिको मृत्यु हुन्छ ।

६१. यदि यो रेखा चन्द्र पर्वतमा गएर समाप्त हुन्छ भने व्यक्ति प्रसिद्ध तान्त्रिक हुन्छ ।

६२. यदि यो रेखा जालिदार छ भने व्यक्ति कुशल वक्ता हुन्छ ।

६३. यदि यो रेखा टेढो भएर अगाडि बढेको छ भने व्यक्तिले जुवामा आफ्ना सबै सम्पत्तिहरू बर्बाद गर्दछ ।

क्रमश:

## दिव्य गुरू महोत्सव

फाल्गुण ९ गते (फ्रेबुअरी २१)का दिन विद्याश्रम प्राङ्गणमा दिव्य गुरु महोत्सव कार्यक्रम हर्षोल्लासका साथ मनाइयो । उक्त अवसरमा विद्याश्रममा अध्ययनरत विद्यार्थीहरूबाट गुरु पूजन, हवन, आरती आदि सम्पन्न भएका थिए भने विद्यार्थीहरूलाई योगको महत्व बुझाउँदै प्रयोगात्मकरूपमा योग कक्षा सञ्चालन गरिएको थियो । सो अवसरमा विद्यार्थीहरूले आ-आफ्ना प्रतिभा पनि देखाएका थिए । कार्यक्रम बिहान १०:१५ बजेबाट शुभारम्भ भई अपराह्न ४:०० बजे समापन भएको थियो ।

### MY VIDYASHRAM

Our school's name is Gorakshya Nikhil Jyoti Divya Vidyashram . It is under the management of Siddhashram Shakti Kendra Nepal. It is located at Basundhara, Kathmandu. There are 3 houses. There is a big Play Ground. There are many rooms like A/V room, library room, computer room , prayer room, first aid, science lab etc. We worship our two Gurudevs. In the morning we pray in the prayer room. We do yoga, meditation and pranayam. I like my school very much.

— Abina Ghale, Class Two
G.N.J.D. Vidyashram

वार्षिक खेलकुद कार्यक्रमका केही झलक

## विविध गतिविधिहरू

गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रममा अध्ययनरत विद्यार्थीहरूका लागि विभिन्न तालिम तथा प्रशिक्षण दिने क्रममा हालै विभिन्न गतिविधिहरू सम्पन्न भएका छन् ।

यस क्रममा यस विद्याश्रममा अध्ययनरत कक्षा ७, ८ र ९ का लागि सा.प. तहबाट विशेष ध्यानको प्रशिक्षण प्रदान भएको थियो । यसैगरी कक्षा ४, ५ र ६ का लागि पनि सोही तहबाट विशेष ध्यानको प्रशिक्षण प्रदान भएको थियो ।

गतिविधिकै क्रममा डा. युवराज पाण्डेले विद्यार्थीहरूलाई प्राय: लाग्नसक्ने विभिन्न रोगहरूका सम्बन्धमा जानकारीमूलक प्रशिक्षण दिनुभएको थियो भने डा. मनोज अधिकारीले आयुर्वेदका विभिन्न सजिला घरेलु उपचार विधिहरूका बारेमा प्रशिक्षण दिनुभएको थियो । यस्तै गत महिनामा नै कक्षा ८, ९ का विद्यार्थीहरूलाई ज्योतिषसम्बन्धी प्रशिक्षणको कार्यक्रम पनि सम्पन्न भएको थियो ।

### वार्षिक खेलकुद

गत फागुन २ गते गो.नि.ज्यो.दि.वि.प्रांगण बसुन्धरामा विशेष वार्षिक खेलकुद कार्यक्रम सम्पन्न भयो । खेलकुदअन्तर्गत फ्रि रेस, रिले रेस, साइड रेस, क्वोइन पिकिङ, स्याक रेस, स्वीट इटिङ, टोरटोइज रेस, म्युजिकल चेयर, फास्ट मेकअप, स्किपिङ कम्पिटिसन, टार्गेट हिटिङ, बास्केटबल आदि खेलहरू खेलिएका थिए । छात्राहरूको बास्केटबल खेलमा कक्षा ९ विरुद्ध कक्षा ८ का छात्राहरूले जित हासिल गरेका थिए भने छात्रहरूतर्फ वेदव्यास सदनले विश्वामित्र सदनलाई हराएको थियो । प्रि. प्राइमरी कक्षाका विद्यार्थीहरूबीच भएको खेल निकै रमाइलो थियो । कार्यक्रममा प्रत्येक कक्षाका विद्यार्थीहरूका लागि बेग्ला बेग्लै खेलकुद क्रियाकलापको व्यवस्था भएको थियो ।

### नि:शुल्क स्वास्थ्य शिविर

गत फागुन १३ गते विद्याश्रममा अध्ययनरत विद्यार्थीहरूका लागि नि:शुल्क स्वास्थ्य शिविर सम्पन्न भयो । उक्त शिविरमा वरिष्ठ बाल विशेषज्ञ डा. कृष्णप्रसाद विष्ट र आयुर्वेदाचार्य रामचन्द्र अधिकारीलगायत अनुभवी चिकित्सकहरूद्वारा परीक्षण गरिएको थियो भने उक्त शिविरमा नि:शुल्करूपमा आयुर्वेदिक तथा एलोप्याथिक औषधिहरू पनि वितरण गरिएको थियो ।

# योग र कुण्डलिनी चक्र

***अघिल्लो अंकबाट क्रमशः***

...पूर्वीय योग विज्ञानका शास्त्रहरूमा मानवशरीरमा कुण्डलिनी चक्रहरू विद्यमान रहेको कुरा त प्राचीन कालदेखि नै उल्लेख भएको पाउँछौं। प्रत्येक चक्र रहेको स्थान नजिकै महत्त्वपूर्ण अन्तःस्रावी ग्रन्थि भेटिएपछि वैज्ञानिकहरूले ती चक्र र ती अन्तःस्रावीय ग्रन्थि (Endocrine Gland) हरूको सम्बन्धमा खोज गर्न थालेका छन् । मानवशरीरभित्र हुने धेरै प्रकारका कार्यहरू तिनै अन्तःस्रावीय ग्रन्थिहरूले निकाल्ने हार्मोनका कारण सम्पन्न भइरहेका हुन्छन् । त्यसैले जुन स्थानमा जुन ग्रन्थि छ यदि त्यो ग्रन्थि नजिकको चक्र जागरणको अवस्थामा पुग्यो वा त्यो चक्रले राम्रो आध्यात्मिक ऊर्जा प्रवाह गर्न थाल्यो भने चक्र वरिपरिका सबै सूक्ष्म तथा स्थूल अंग-प्रत्यंग सक्षम र सबल हुने अनुमान वैज्ञानिकहरूले गरेका छन् । जब चक्रको राम्रो प्रभाव पर्न जान्छ, अन्तःस्रावीय ग्रन्थिहरूले पूर्ण कार्य गर्न थाल्दछन् तब शरीरमा आमूल परिवर्तन नआउने भन्ने त कुरै हुँदैन ।

मानवशरीरमा स्थित मूलाधार चक्रको प्रभाव त्यस चक्रको नजिकमा स्थित अन्तस्रावीय ग्रन्थिहरूमा पनि पर्दछ। जब मूलाधार चक्रको स्पन्दन वा जागरण हुन थाल्दछ तब यसको ऊर्जाले वरिपरिका सबै अंग-प्रत्यंग, ग्रन्थि, नाडी आदिमा राम्रो प्रभाव पर्दछ । यदि यो चक्र सदा सुषुप्त नै रहिरहेमा वरिपरिका ग्रन्थि, नाडीहरू पनि बिस्तारै कमजोर हुँदै जाने, यिनीहरूको कार्यशक्तिमा ह्रास आउने, विभिन्न रोगहरू देखा पर्न सक्ने हुन्छ । मेरुदण्डको तल्लो भागमा गुदद्वार र मूत्रमार्गको बीचमा अवस्थित मूलाधार चक्रको नजिकमा पुरुष र स्त्रीमा फरक फरक किसिमका ग्रन्थिहरू रहेका हुन्छन् । पुरुषमा हुने ग्रन्थिहरूमा १. अण्डकोष (Testis) २. सेमिनल भेसिकल (Seminal Vesicle) ३. प्रोस्टेट ग्रन्थि आदि पर्दछन् ।

**अण्डकोष र यसको कार्य :**

पुरुषमा दुईवटा अण्डकोष रहेका हुन्छन् । यिनीहरूले प्रजनन बीज शुक्रकीटको उत्पादन गर्नुको साथैसाथै विभिन्न प्रकारकार हर्मोनहरू जस्तैः टेस्टोस्टेरोन, डाइहाइड्रोटेस्टेस्टेरोन र एन्ड्रोस्टेनिडायोन आदि पनि उत्पादन गर्ने गर्दछन् । यी तीनवटा हार्मोनमध्ये टेस्टोस्टेरोनको भूमिका महत्त्वपूर्ण रहेको पाइन्छ । उक्त हार्मोनहरूका कार्यहरू यसप्रकार छन्-

क) गर्भमा पर्ने प्रभाव - लिंग भेद (Sex Differentiation)

बच्चा आमाको गर्भमा हुँदा पनि उक्त हार्मोनको स्रवण हुन्छ । टेस्टोस्टेरोन हार्मोनको उपस्थितिमा पुरुष प्रजनन अंगहरूको विकास हुन्छ र छोरा जन्मन्छ अन्यथा स्त्री प्रजनन अंगहरूको विकास भई छोरी जन्मिन्छे ।

ख) अन्य सहायक प्रजनन अंगहरूको विकासमा साथै बाह्य प्रजनन अंगहरू जस्तैः लिंग, सेमिनल भेसिकल, प्रोस्टेट ग्रन्थि, प्रजनन नलीहरूको विकास, शुक्रकीटको उत्पादन तथा यौन उत्तेजना आदि कार्यहरूमा यसको महत्वपूर्ण भूमिका रहेको हुन्छ ।

ग) किशोरावस्थामा देखिने परिवर्तनहरू (Secondery Sexual Characters)

यौवन अवस्थामा देखिने लक्षणहरूको उचित विकासको लागि टेस्टोस्टेरोनको भूमिका रहेको हुन्छ । ती लक्षणहरू जस्तैः हाडहरूको पूर्ण विकास, शरीरमा मासु, छाला, रौं, स्वर आदिमा देखिने परिवर्तनहरूमा पनि उक्त हार्मोनको भूमिका रहेको हुन्छ । यस हार्मोनको स्राव उचितरूपमा नभएमा अण्डकोषको पूर्ण विकास हुन सक्दैन, शुक्र उत्पादनमा बाधा उत्पन्न हुन्छ र प्रजनन क्रियामा गडबडी देखिन्छ । साथै यसको अनावश्यकरूपमा बढी स्राव भएमा शरीरमा प्रजनन अंगहरूको साथै मासुको बढी विकास हुन्छ भने यौवन अवस्थामा देखिने लक्षणहरूको बढी वृद्धि हुन्छ ।

त्यसैगरी महिलामा स्थित अन्तस्रावी ग्रन्थिहरूमा निम्न पर्दछन्–

१.डिम्ब (Ovary) र २.अपरा (Placenta)

ओभरीबाट निस्कने मुख्य हार्मोनहरूमा इस्ट्रोजिन र प्रोजेस्टेरोन पर्दछन् । यिनीहरूले आमाशय, फेलोपियन ट्युब, योनि, स्तन आदि अंगहरूको विकासमा मुख्य सहयोग गर्दछन् । यी हार्मोनहरूको स्रावको मात्रामा कमी हुँदा महिलामा मैथुन क्षमता, गर्भाधारण र गर्भको उचित विकास गर्ने क्षमता, यौवन अवस्थामा देखिने शारीरिक सुगठन, आकर्षण र सुन्दरता आदिमा ह्रास आउँछ । महिनावारीमा गडबडी देखिन्छ । गर्भवती भएमा स्तनबाट राम्रोसँग दूध निस्कँदैन । साथै यी हार्मोनहरूको बढी मात्रामा स्राव भएमा पनि विविध गडबडीहरू देखिन्छन् । तसर्थ यी हार्मोनहरूको सन्तुलितरूपमा स्राव हुनु आवश्यक हुन्छ ।

स्नायु तन्त्रअन्तर्गतको कोकाइजल (Coccygeal) नामक स्नायु प्लेक्सस मूलाधार चक्रसँग सम्बन्धित भएको मानिन्छ। यस प्लेक्ससले यिनै अन्तःस्रावीय ग्रन्थिहरू तथा प्रजनन संस्थानसँग सम्बन्धित अंगहरूको कार्यलाई सुचारु बनाउनका लागि कार्य गरिरहेको हुन्छ । मूलाधार चक्रको जागरणबाट यस प्लेक्ससले पनि राम्रो कार्य गर्न थाल्दछ ।

भनिन्छ, यदि यी प्रजनन संस्थानसँग सम्बन्धित हार्मोनहरूको स्रावले नै मानिसमा यौवनावस्था, शारीरिक सुन्दरता, यौन क्षमता प्रदान गरिरहेको हुन्छ । जब मानिसको उमेर ढल्किँदै जान्छ तब यी हार्मोनहरूको स्रावमा बिस्तारै कमी हुँदै जान्छ र मानिसमा पनि शक्ति, सुन्दरता र यौवनावस्था पनि बिस्तारै ओझेल पर्दै जान्छ । यदि यी हार्मोनहरूको स्राव अनवरतरूपमा भइरहने हो भने मानिसमा छाला चाउरी पर्ने, शक्ति र सुन्दरता ह्रास हुने, चाँडै बुढ्यौलीले छुने नहुन सक्छ भन्ने वैज्ञानिकहरूको मान्यता रहेको छ । यी हार्मोनहरूको अनवरत स्राव मूलाधार चक्रको जागरण भएमा मात्र सम्भव हुने देखिन्छ ।

## मूलाधार चक्र जागरण प्रक्रिया :

- मूलाधार चक्रमा स्थित चार दलमा रहेका प्रत्येक बीज मन्त्रको निरन्तर जपबाट एक एक दल जागृत गर्दै मूलाधार चक्रको जागरण गर्न सकिन्छ ।
- मूलाधार चक्रको मध्यमा स्थित मूल बीज मन्त्र 'लं'को निरन्तर जपबाट पनि मूलाधार चक्रको जागरण गर्न सकिन्छ ।
- जागरणका लागि उचित समयको अन्तरालमा पञ्चकर्म तथा शरीर शोधनका क्रियाहरू जस्तै नेति, धौति, वमन, वस्ती, रेचन आदि क्रियाहरू सम्पन्न गर्नुपर्दछ ।
- सद्गुरुबाट कुण्डलिनी जागरण दीक्षा तथा साधनाबाट जागरण गर्न सकिन्छ ।

- यौगिक क्रियाहरूको निरन्तर अभ्यासबाट । जस्तैः विशेष गरी भस्त्रिका प्राणायाम, नाडीशोधन प्राणायाम तथा मूलाधार चक्रमा प्रभाव पुऱ्याउने योगासनहरूको निरन्तर अभ्यासबाट पनि यस चक्रको जागरण गर्न सकिन्छ ।
- ध्यानात्मक विधिमा आफूलाई सजिलो लाग्ने आसन जसमा पद्मासन र सिद्धासन उत्कृष्ट मानिन्छ, आदिमध्ये एउटा आसनमा बसेर सद्गुरुहरूबाट प्राप्त ध्यानको विधिहरूको निरन्तर र विधिवत् अभ्यासबाट यस चक्रको जागरण गर्न सकिन्छ ।
- सद्गुरुहरूबाट प्राप्त मन्त्र साधनाको प्रक्रियाबाट पनि जागरण गर्न सकिन्छ ।
- सद्गुरु तथा देवीदेवताहरूलाई खुशी बनाउने सरल माध्यम भनेको गुरु सेवा हो । गुरु सेवाको माध्यमबाट सद्गुरुहरूलाई खुशी बनाएर सोझै उहाँहरूको कृपाबाट, शक्तिपात क्रियाबाट पनि चक्र जागरण सहज हुन्छ ।

क्रमशः जय गुरुदेव !

# बहुउपयोगी फल अंगुर

आयुर्वेदका शास्त्रहरूमा फलमा उत्तम अंगुरलाई मानिएको पाइन्छ। अंगुरको स्वाद, यसले दिने तृप्ति आदिको अनुभव नगर्ने मानिस समाजमा शायद कमै होलान् । यसको स्वाद मात्र होइन उपयोग र प्रयोगहरू पनि त्यति नै महत्त्वपूर्ण र सुन्दर छन् । प्राचीन आयुर्वेद विज्ञानमा त यसको वर्णन छँदैछ तर आधुनिक वैज्ञानिक प्रयोगशालामा पनि यसको बारेमा धेरै अनुसन्धान भइसकेका छन् । यसमा पाइने रसायनिक तत्त्वहरू र यिनीहरूको कार्यहरूका बारेमा नयाँ तथ्यहरू पनि फेला परेका छन् । आयुर्वेदको प्रमुख ग्रन्थ चरक संहितामा भनिएको छ-

**तृष्णादाहज्वरश्वासरक्तपित्तक्षतक्षयान् ।**
**वातपित्तमुदावर्तं स्वरभेदं मदात्ययम् ॥**
**तिक्तास्यतामास्यशोषं कासं चाशु व्यपोहति ।**
**मृद्वीका बृंहणी वृष्या मधुरा स्निग्धशीतला ॥**

-च.सू. २७/१२५-१२६

अंगुरले प्यास, दाह, ज्वर, श्वास, रक्तपित्त, उर:क्षत, राजयक्ष्मा, वातविकार, पित्तविकार, उदावर्त, श्वरभेद, मदात्यय, मुखको तितोपना, मुखको सुख्खापन र खोकी लाई शीघ्र ठीक गर्दछ । साथै यो बृंहण (बल दिने), वीर्य वर्धक हुन्छ । रसमा मधुर, र वीर्यमा शीत हुन्छ ।

**द्राक्षा फलोत्तमा वृष्या चक्षुष्या सृष्टमूत्रविट् ।**
**स्वादुपाकरसा स्निग्धा सकषाया हिमा गुरुः ॥**
**निहन्त्यनिलपित्तास्रतिक्तास्यत्वमदात्ययान् ।**
**तृष्णाकासश्रमश्वासस्वरभेदक्षतक्षयान् ॥** - अ.हृ.सू.६

द्राक्षा अर्थात् अंगुर फलहरूमा उत्तम हुन्छ । यो वीर्यवर्धक, नेत्र हितकारी छ, मलमूत्रलाई राम्रोसँग निष्कासन गर्छ । यसको रस मधुर हुन्छ । यो स्निग्ध, कषाय, शीत र गुरु गुणयुक्त हुन्छ । वात र पित्त विकार, मुखको तिक्तता, मदात्यय, तृष्णा, कास, श्रम, श्वास, स्वरभेद, क्षत र क्षयमा लाभ पुऱ्याउँछ ।

अंगुरको वैज्ञानिक नाम Vitis vinifera हो । यो Vitaceae कुलअन्तर्गतको जाति हो । संस्कृतमा यसलाई द्राक्षा (मनको प्रिय), मृद्वीका (जसले शरीरलाई मृदु र स्निग्ध राख्दछ), गोस्तनी (गाईको स्तनको आकारको फल) आदि भनिन्छ । हिन्दीमा दाख र अंग्रेजीमा ग्रेप भनिन्छ । यसको बोट लहरा आकारको हुन्छ । पात ६-८ इन्च चौडा हृदयाकारको ३-७ कोणित वा खण्डित र रोमयुक्त हुन्छ । फूलहरू हरिया र गुच्छायुक्त हुन्छन् । फल गाईको स्तनको आकारका गुच्छामा लाग्दछन् जसमा ३-५ बीजहरू हुन्छन् ।

**रासायनिक संगठन** :

फलमा ग्लुकोज, टार्टेरिक एसिड, साइट्रिक एसिड, म्यालिक एसिड, सोडियम र पोटासियम क्लोराइड, पोटासियम सल्फेट, म्याग्नेशियम, फिटकिरी, लौह, एल्बुमिन आदि पाइन्छन् काँचो फलमा अक्जालिक एसिड पनि पाइन्छ ।

**गुण** : आयुर्वेदका ग्रन्थहरूमा वर्णन गरिएअनुसार यसको फल स्निग्ध, गुरु, मृदु, रस मधुर, विपाक मधुर र वीर्य शीत हुन्छ ।

**प्रयोज्य अंग**- मूलरूपमा यसको फल अत्यधिक प्रयोग गरिन्छ । साथै पत्र, काण्ड र फूलको प्रयोग पनि प्रयोग गरिएको पाइन्छ । पत्रको प्रयोग मूत्र विरेचन, छालाको रोग, फिरङ्गी र पाइल्स रोगमा गरिन्छ । काण्डको खरानी हाडजोर्नी दुखेमा र पाइल्समा प्रयोग गरिन्छ । पुष्पको प्रयोग यकृत् विकार, रक्ताल्पता, महिनावारीको गडबडी, श्वासकास आदि रोगमा प्रयोग गरिन्छ ।

**अंगुरसम्बन्धी केही महत्त्वपूर्ण अनुसन्धानहरू** :

१. **मुटुको रोगमा-** अंगुरबाट बनाइएको रक्सीको सीमित मात्राको सेवनले मुटुगत रोगमा फाइदा पुऱ्याउने कुरा वैज्ञानिकहरूको अनुसन्धानले बताएको छ । अंगुरमा पाइने

रसायन Resveratrol ले Antioxidant को काम गरिरहेको हुन्छ । साधारणतया Antioxidant ले शरीरभित्र हानिकारक मानिने Free radicals हरू बन्न दिँदैन । यो रसायन साधारण खानामा पाइँदैन मात्र अंगुरमा पाइन्छ । मुटुको बचावटमा यस तत्त्वले महत्त्वपूर्ण भूमिका खेल्दछ । यसले शरीरलाई आवश्यक पर्ने LDL(Low density lippoproteins) को मात्रालाई घट्न दिँदैन । त्यसैगरी रक्तनलीहरू बाक्लो हुने( Atherosclerosis), Vericose vein, हृदयघात आदि रोगहरूमा फाइदा गरेको अनुसन्धानले देखाउँछ ।

अंगुरको पात र फलमा क्यान्सरविरोधी गुण रहेको तथ्य अनुसन्धानबाट पत्ता लागेको छ । अंगुरमा पाइने Resveratrol नामक रसायनले नै स्तन क्यान्सरमा धेरै फाइदा पुऱ्याएको पाइएको छ ।

**सावधानी** :

अंगुरको फलमा बढी मात्रामा ग्लुकोज पाइने हुनाले मधुमेह भएका रोगीले यसको सेवन गर्नुहुँदैन । साथै यसको रेचक गुण भएकोले अतिसार र आन्द्राका रोगीहरूमा पनि वर्जित छ ।

**औषधीय प्रयोग** :

यसको प्रयोग प्रायः वातपित्तजन्य रोगहरूमा गरिन्छ । निम्न अवस्थाहरूमा यस फललाई प्रयोग गरेमा धेरै फाइदा पुग्दछ–

मस्तिष्कको दुर्बलतामा, मादक पदार्थ सेवन गरेर मात लागेको अवस्थामा, बढी तिर्खा लाग्न रोगमा वा तिर्खा लागेको समयमा, दिशा राम्रोसँग खलास नभएको अवस्थामा, कामला (Jaundice), हृदयको कमजोरीमा, वातरक्त (Gout) आदि रक्तविकार एवं रक्तपित्त रोग आदिमा उपयोगी छ ।

त्यसैगरी फोक्सोको रोग, कमजोरीले छाती दुख्ने, क्षय, श्वरभेद, कास, श्वास, पिसाब फेर्न गाह्रो हुने, दुख्ने र पोल्ने रोगमा, शुक्रदौर्बल्य, गर्भाशयको कमजोरी, सामान्य दुर्बलता, रक्तविकार नाश गर्ने हुनाले छालाका रोगहरूमा प्रयोग गर्न सकिन्छ । यसको सेवनबाट तापक्रम घट्ने हुनाले प्रायः ज्वर, सन्ताप, तृष्णा, दाह आदि विकारहरूमा बढी प्रयोग गरिन्छ ।

विभिन्न औषधि कम्पनीहरूले द्राक्षाबाट निर्मित औषधिहरू निकालेका पाइन्छन् । तिनीहरूमा विशेष गरी द्राक्षारिष्ट, द्राक्षादिक्वाथ, द्राक्षादिलेह, द्राक्षाघृत बढी उपयोगी छन् । यिनीहरू प्रयोग चिकित्सकको परामर्शानुसार गर्न सकिन्छ । माथि बताइएका विकारहरूमा प्रायः आफ्नो पाचन शक्तिअनुसार अंगुरको नियमित सेवनले रोगहरू नाश गर्न र बल प्रदान गर्न धेरै मद्दत गर्दछ । जय गुरुदेव !

## गुरू मेरो मनमा

गुरू मेरो मनमा
फूल बनेर फुल्नु हुन्छ ।
गुरू मेरो मनमा
धड्कन बनेर धड्किनु हुन्छ ।
गुरू मेरो शरीरमा
रगत बनेर बग्नु हुन्छ ।
गुरू मेरो आँखामा
नानी बनी चम्कनु हुन्छ ।
गुरू मेरो देहमा
आत्मा बनी रहनु हुन्छ ।
गुरू मेरो मनमा
फूल बनेर फुल्नु हुन्छ ।

बिमला भण्डारी
आरती संचालन केन्द्र, गोंगबु
काठमाडौं

# समस्या छ ?

**यदि तपाईंको कुनै समस्या छ भने**
**त्यसको समाधान पनि अवश्य छ ।**

**तपाईं कुनै पनि समस्याबाट पीडित हुनुहुन्छ भने आजै, अहिल्यै तल लेखिएको प्रश्नपत्र भरेर सम्भव भएसम्म एक प्रति फोटो (जुनसुकै साइज) सहित हामीलाई पठाउनुहोस्। हामी तपाईंको प्रश्न, समस्या वा जिज्ञासा परमपूज्य सद्‌गुरुदेवसमक्ष राखिदिन्छौँ र गुरुदेवबाट प्राप्त निर्देशनहरू तपाईंसमक्ष पुर्‍याउनेछौँ।**

**त्यसपछि हेर्दै जानुहोस् कसरी तपाईंको समस्या समाधान हुँदै जानेछ।**

## जिज्ञासा/सोधपुछ फारम

मितिः...........................

नाम :.......................................................................... जन्म मिति :.........................

ठेगाना : अञ्चल .................... जिल्ला................. नपा/गाविस .............................................

टोल....................................................... वडा नं.......... पेशा :...................................

इमेल ठेगानाः ................................................... फोनः................................................

समस्या : ✍

..................
हस्ताक्षर

<u>सम्झनुपर्ने कुराः</u> प्रश्न सोधिएको ३ महिनाभित्र उत्तर लगिसक्नु पर्नेछ । तपाइँका प्रश्न तथा उत्तरहरू गोप्य रहने छन् । प्रश्नपत्रसाथ रु.११५/– (प्रश्नको रु. १००/– र हुलाक खर्च रु. १५/– सहित) पठाउनुहोला र एउटा प्रश्नपत्रमा एउटै विषयसँग सम्बन्धित प्रश्न मात्र लेख्नुहोला ।

पत्र पठाउने ठेगानाः **परामर्श सेवा, सिद्धाश्रम शक्ति केन्द्र, पो.ब.नं १०५११, काठमाडौं, नेपाल ।**

## २०६६ चैत्र महिनामा पर्ने चाडपर्वहरु

| | |
|---|---|
| चैत्र १ गते | पिशाच चतुर्दशी |
| चैत्र २ गते | **श्री शिव गोरक्ष हवन**, घोडेजात्रा |
| चैत्र ३ गते | **तान्त्रोक्त वटुक भैरव हवन, तान्त्रोक्त गणपति हवन** |
| चैत्र ४ गते | **तान्त्रोक्त महालक्ष्मी हवन, तान्त्रोक्त विन्ध्यवासिनी हवन** |
| चैत्र ५ गते | **तान्त्रोक्त बगलामुखी हवन, तान्त्रोक्त महर्षि वेदव्यास हवन** |
| चैत्र ८ गते | **दिव्य गुरु महोत्सव** |
| चैत्र १० गते | चैत्राष्टमी, गोरखकाली पूजा, चैते दशैं |
| चैत्र ११ गते | रामनवमी |
| चैत्र १३ गते | कामदा एकादशी व्रत |
| चैत्र १४ गते | प्रदोष व्रत |
| चैत्र १५ गते | महावीर जयन्ती |
| चैत्र १७ गते | हनुमान जयन्ती |
| चैत्र २४ गते | अष्टमीव्रत, गोरखकाली पूजा |
| चैत्र २८ गते | वरुथिनी एकादशी |
| चैत्र २९ गते | प्रदोषव्रत |

**प्रत्येक बृहस्पतिबार बिहान १०:०० बजे-गुरू पूजन**
**प्रत्येक दिन साँझ ५:०० बजे-आरती**

**विक्रम सम्वत् २०६७ सालमा पर्ने चाडपर्वहरू तथा आश्रमका कार्यक्रमहरू सहितको रंगीन क्यालेण्डर प्रकाशित हुँदैछ। प्रतीक्षा गर्नुहोला । जय गुरुदेव !**

## हार्दिक श्रद्धाञ्जलि

जन्म १९८९/११/२५ **स्वर्गीय हेमनाथ न्यौपाने** स्वर्गारोहण २०६६/१०/१९

आत्मीय गुरुसेवक साधक हरि न्यौपानेको बुबा हेमनाथ न्यौपानेको स्वर्गारोहण भएकाले दिवंगत आत्माको चिर शान्तिका लागि सद्‌गुरुदेवहरूको चरणकमलमा सभक्ति प्रार्थना गर्दै शोक सन्तप्त परिवारजनप्रति हार्दिक समवेदना व्यक्त गर्दछौं ।

**सिद्धाश्रम शक्ति केन्द्र**
**सम्पर्क कार्यालय बाहबिसे, सिन्धुपाल्चोक परिवार**

## हार्दिक श्रद्धाञ्जलि

**स्व. टेकनाथ योगी**

गोरखास्थित गुरु गोरखनाथ मन्दिरका ज्येष्ठ पूजारी तथा हाम्रा शुभचिन्तक टेकनाथ योगीज्यूको २०६६ फाल्गुण २ गते स्वर्गारोहण भएकोमा दिवंगत आत्माको चिर शान्तिका लागि परमपूज्य सद्‌गुरुदेवहरूसमक्ष कोटि कोटि प्रार्थना गर्दछौं ।

**सिद्धाश्रम शक्ति केन्द्र**
**परिवार**

## हार्दिक श्रद्धाञ्जलि

जन्म २०३३/०१/५ **स्वर्गीय जु.ई. नानुकाजी महर्जन** स्वर्गारोहण २०६६/१०/२१

हाम्रो परमप्रिय भाइ नानुकाजी महर्जनको सवारी दुर्घटनामा परी असामयिक स्वर्गारोहण भएकोमा दिवंगत आत्माको चिर शान्तिको लागि परमपूज्य सद्‌गुरुदेवहरूसँग प्रार्थना गर्दछौं साथै यस दुःखद घडीमा हामीलाई सान्त्वना तथा समवेदना प्रकट गर्नुहुने सम्पूर्ण मित्र एवं आत्मीयजनप्रति हार्दिक कृतज्ञता अर्पण गर्दछौं ।

**दाजु भाउजू– मचाराजा महर्जन / जिना महर्जन**
**सानुकाजी महर्जन / निर्मला महर्जन**
**दिदि– न्हुच्छे माया रीता महर्जन / भिनाजु ललित महर्जन**
**भतिजा– रोहन महर्जन, प्रिजा महर्जन**
**भान्जा– रिकेश महर्जन,**
**भान्जी– बिमला महर्जन, भान्जी ज्वाइँ– लक्ष्मण महर्जन**
**भान्जी– लिस्का महर्जन**

**का.म.न.पा. २६, नरदेवी**

# सिद्धाश्रम शक्ति केन्द्र
# सम्पर्क कार्यालय तीनकुने, काठमाडौँ

काठमाडौँको कोटेश्वरनजिकै चक्रपथको छेउमा सम्पर्क कार्यालय तीनकुने अवस्थित छ । यस सम्पर्क कार्यालय मुनिभैरवको मन्दिरसँगै रहेको छ। मुनि भैरव यहाँको प्रसिद्ध मन्दिर हो। यहाँ गरिएको भाकल पूरा हुने विश्वास गरिन्छ। यसैले पनि यो स्थान तान्त्रिक स्थानको रूपमा पनि परिचित छ।

सिद्धाश्रम शक्ति केन्द्र सम्पर्क कार्यालय तीनकुनेको स्थापना २०६४ साल श्रावण १२ गते सुविधानगरमा प्रचारप्रसार कक्षको रूपमा भएको थियो। पछि यस आश्रमको विकास र विस्तार हुँदै आरती सञ्चालन केन्द्र, प्रस्तावित सम्पर्क कार्यालय हुँदै २०६६ साल मंसिर १९ गते सम्पर्क कार्यालयको रूपमा परिणत भएको हो। सम्पर्क कार्यालयमा परिणत भइसकेपछि यस सम्पर्क कार्यालयका लागि ७ जना गुरुसेवा दल सदस्यको हाजिना समूह पनि गठन भएर क्रियाशील भइसकेको छ।

यस सम्पर्क कार्यालयका नियमित गतिविधिअन्तर्गत प्रत्येक दिन अपराह्न ३:०० बजे यस आश्रम खुल्ने गर्दछ। दैनिक साँझ ५ बजे दिव्य गुरु आरती सम्पन्न हुन्छ। यस सम्पर्क कार्यालयले योगका कक्षाहरू सफलतापूर्वक सञ्चालन गरिसकेको छ। हालसालैदेखि सद्गुरुदेवहरूको असीम कृपास्वरूप यस आश्रमले प्रत्येक आइतबार साँझ ३:०० बजेपछि परामर्श सेवा प्रदान गरिरहेको छ। परामर्श कार्यक्रममा तान्त्रिक हिलिंगको सुविधा पनि प्रदान भइरहेको छ। यसैगरी समय समयमा विभिन्न स्थानहरूमा भजनकीर्तनलगायत प्रचारात्मक कार्यक्रमहरूको आयोजना यस सम्पर्क कार्यालयले गर्ने गरेको छ। क्षेत्रीय तथा केन्द्रीय तहबाट सम्पन्न हुने दिव्य गुरु महोत्सव, मासिक हवन कार्यक्रम तथा अन्य विशेष कार्यक्रमहरूमा यस सम्पर्क कार्यालय सहभागी हुँदै आइरहेको छ। यस्तै आध्यात्मिक शक्ति अनुसन्धानमूलक मासिक गोरक्ष निखिल वाणीको वार्षिक सदस्य विस्तार गर्ने कार्य पनि यस सम्पर्क कार्यालयले स्थापनाकालदेखि नै गर्दै आइरहेको छ। यहाँ निकट भविष्यमा नै थप कार्यक्रमहरू संचालन हुने आशा गर्न सकिन्छ।

समाजलाई गोरक्ष निखिल ऊर्जाले सिंचित गर्दै अध्यात्ममय बनाउन यस सम्पर्क कार्यालयको महत्त्वपूर्ण भूमिका रहने कुरामा विश्वस्त हुन सकिन्छ।

## हवन कार्यक्रम

सिद्धाश्रम शक्ति केन्द्रका मासिक हवन कार्यक्रम अन्तर्गत हरेक महिनाको पहिलो हप्ता सञ्चालन हुँदै आइरहेका हवन कार्यक्रमहरू गत फाल्गुण महिनामा निम्नानुसार सम्पन्न भयो– फाल्गुण ३ गते सोमबार पशुपति मृगस्थलीस्थित श्री गुरु गोरखनाथको मन्दिर प्रांगणमा श्री शिव गोरक्ष हवन, फाल्गुण ४ गते मंगलबार लगनखेलस्थित वटुक भैरव मन्दिर प्रांगणमा तान्त्रोक्त वटुक भैरव हवन, फाल्गुण ५ गते बुधबार लखनखेलस्थित माता महालक्ष्मीको मन्दिर प्रांगणमा तान्त्रोक्त महालक्ष्मी हवन र फाल्गुण ६ गते बिहीबार कुम्भेश्वर पाटनस्थित माता बगलामुखी मन्दिर प्रांगणमा तान्त्रोक्त बगलामुखी हवन सम्पन्न भयो । उपरोक्त हवन कार्यक्रमहरूमध्ये तान्त्रोक्त वटुक भैरव हवन बिहान ७:०० बजेदेखि सञ्चालन भएको थियो भने बाँकी हवन कार्यक्रमहरू बिहान ८:०० बजेबाट सञ्चालन भएका थिए ।

यस्तै मासिक हवनकै शृङ्खलामा गत फाल्गुण ५ गते बुधबार पोखराको विन्ध्यवासिनी मन्दिर प्रांगणमा तान्त्रोक्त विन्ध्यवासिनी हवन कार्यक्रम सम्पन्न भयो। फाल्गुण ६ गते बिहीबार तनहुँको दमौलीस्थित वेदव्यास गुफा परिसरमा तान्त्रोक्त महर्षि वेदव्यास हवन कार्यक्रम सम्पन्न भयो । फाल्गुण ४ गते मंगलबार भक्तपुरको सूर्यविनायक मन्दिर प्रांगणमा तान्त्रोक्त गणपति हवन सम्पन्न भयो भने उक्त दिनमा नै काभ्रेको चण्डेश्वरी मन्दिरमा तान्त्रोक्त चण्डेश्वरी हवन सम्पन्न भयो ।

## दिव्य गुरु महोत्सव

अप्रिल २१, १९३३ मा भएको परमपूज्य सद्‌गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यूको अवतरणप्रति नतमस्तक हुँदै प्रत्येक महिनाको २१ तारीखलाई दिव्य गुरु महोत्सवको रूपमा मनाउँदै आइरहेको सिद्धाश्रम शक्ति केन्द्रले गत फाल्गुण ९ गते (फेब्रुअरी २१ तारीख) पनि यस कार्यक्रमलाई सदाझैं भव्य एवं दिव्यरूपमा सम्पन्न गऱ्यो। काठमाडौँको कमलपोखरीस्थित जैन भवनमा सम्पन्न भएको उक्त कार्यक्रमको शुभारम्भ बिहान १०:१५ बजे प्रार्थना तथा गोरक्ष निखिल स्तवनको पाठबाट भएको थियो । दुई चरणमा विभाजित उक्त कार्यक्रम अपराह्न ३:३० सम्म सञ्चालन भएको थियो । कार्यक्रमको पहिलोचरणमा गुरु पूजन, मन्त्रजप, हवन, आरती आदि क्रमहरू सम्पन्न भएका थिए भने दोस्रो चरणअन्तर्गत भजनकीर्तन, नृत्य, प्रवचन आदि क्रमहरू रहेका थिए । कार्यक्रममा पूजन गर्ने सौभाग्य प्रसाद वितरणको अभिभारा वहन गर्दै चण्डिका थापा, गंगालक्ष्मी शाही तथा नवविवाहित दम्पति हरि भट्टराई र लक्ष्मी भट्टराईले प्राप्त गर्नुभएको थियो ।

कार्यक्रमको दोस्रो चरण गुरुसेवा दलका सदस्य साधक विजय शाहीको स्वागत-मन्तव्यबाट शुरु भएको थियो। प्रवचन एवं स्ववचनको क्रममा सावरपन्थी २ का सदस्यले क्षत, मूढ, विच्छेद, एकाग्र र निरुद्ध गरी मनका विभिन्न पाँच अवस्थाको बारेमा विविध जानकारी दिनुभएको थियो। चैत्र महिनामा सम्पन्न हुने विशेष गुरु मन्त्र हवन साधनाको बारेमा पनि उहाँले उक्त अवसरमा जानकारी गराउनुभएको थियो ।

यसै क्रममा सावरपन्थी १ का सदस्यले मनको एकाग्रताको बारेमा जोड दिँदै मनलाई सुदर्शन चक्रको संज्ञा दिनुभएको थियो । उहाँले भन्नुभएको थियो– मनको एकाग्रताबाट नै भगवान् कृष्णले निर्दिष्ट कार्य सम्पन्न गराउनुहुन्थ्यो जसलाई सुदर्शन चक्र भनेर चिनिन्छ। मनलाई तर लगाउने भएकाले मन्त्रलाई मन्तर् पनि भन्दछन्। आफूमा म यस्तो, म उस्तो भन्ने घमण्ड (सान) रहेसम्म आफैंभित्र मसान (म सान) रहने विषयमा पनि उहाँले प्रकाश पार्नुभएको थियो। मनको एकाग्रताको विषयमा 'ध्यानावस्थित तद्‌गतेन मनसा पश्यन्ति यं योगिनो' श्लोकलाई प्रष्ट्याउँदै उहाँले प्रयोगात्मकरूपमा ॐकार ध्यान पनि सम्पन्न गराउनुभएको थियो ।

देश विदेशमा संस्थाअन्तर्गत रहेका सम्पर्क कार्यालयहरू, इकाईहरूमा पनि विविध कार्यक्रमका साथ दिव्य गुरु महोत्सव मनाइएको थियो ।

## महाशिवरात्रि पूजन

परमपूज्य सद्‌गुरुदेवहरूको असीम कृपा, अनुकम्पा एवं आशीर्वादस्वरूप गत माघ २९ गते महाशिवरात्रिको दिनमा सिद्धाश्रम शक्ति नेपालअन्तर्गतका विभिन्न सम्पर्क कार्यालयहरूमा महाशिवरात्रि पूजन कार्यक्रम सम्पन्न गरियो। पूजन कार्यक्रम बिहान ८ बजे शुभारम्भ भएको थियो। स्तुति वन्दना, गुरु पूजन, शिव पूजन, ध्यान, आरती आदि क्रमहरू पूजनको क्रममा सम्पन्न भएका थिए ।

## भजनकीर्तन तथा स्वास्थ्य शिविर

गत माघ २९ गते महाशिवरात्रिको पावन दिनमा विगतका वर्षहरूमा झैं सिद्धाश्रम शक्ति नेपालले पशुपति क्षेत्रमा स्वास्थ्य शिविर तथा भजनकीर्तन कार्यक्रमको आयोजना गऱ्यो । उक्त कार्यक्रम बिहान १० बजे शुभारम्भ भएको थियो । कार्यक्रममा पशुपति दर्शनार्थ आउनुभएका धेरै भक्तजनहरूले प्राथमिक स्वास्थ्य सेवा प्राप्त गर्नुभएको थियो भने दिनभरजस्तो नै चलेको भजनकीर्तनमा नृत्य गर्दै मस्तीमा झुम्नेहरूको संख्या पनि कम थिएन । कार्यक्रममा सावरपन्थी १ र २ तथा सावरमातृका सदस्यज्यूहरूको पनि उपस्थिति रहेको थियो । कार्यक्रममा बेलुकी ५ बजे आरती पनि गरिएको थियो ।

### शिवरात्रिको अवसरमा शंखमूलमा भजनकीर्तन

महाशिवरात्रिकै अवसर पारेर सिद्धाश्रम शक्ति केन्द्र सम्पर्क कार्यालय ललितपुर तथा वागमती सेवा समितिको संयुक्त आयोजनामा गत माघ २९ गते शंखमूलमा रहेको नारायण मन्दिर प्रांगणमा भजनकीर्तन कार्यक्रम सम्पन्न भयो । कार्यक्रम बिहान ११:३० बाट शुभारम्भ भएको थियो जसमा गुरु पूजन, शिव पूजन, आरतीको क्रमपछि दिनभरजसो नै भजनकीर्तन तथा नृत्यको क्रम चलेको थियो। कार्यक्रममा प्रस्तुत नृत्य उपस्थित भक्तजनहरूको विशेष आकर्षण रह्यो ।

### विशालनगरमा भजनकीर्तन

सिद्धाश्रम शक्ति केन्द्र प्रस्तावित सम्पर्क कार्यालय विशालनगर र स्थानीय मनमानेश्वरी युवा क्लबको संयुक्त आयोजनामा मनमानेश्वरी मन्दिर परिसरमा गत माघ २९ गते भजनकीर्तन कार्यक्रम सम्पन्न भयो । महाशिवरात्रिको अवसर पारेर सम्पन्न गरिएको उक्त कार्यक्रम बिहान ७:३० बजेबाट शुरु भएको थियो । कार्यक्रममा स्थानीय वासीहरूको उल्लेख्य सहभागिता रहेको थियो ।

### आ.स.के. थलीले मनायो दोस्रो वार्षिकोत्सव

सिद्धाश्रम शक्ति केन्द्र आरती संचालन केन्द्र थलीको दोस्रो वार्षिकोत्सव गत फागुन २ गते भजनकीर्तनका साथ भव्यरूपमा सम्पन्न गऱ्यो । दिउँसो १ बजे शुभारम्भ भएको कार्यक्रममा सम्पर्क कार्यालय तीनकुने, आरती संचालन केन्द्र सिनामङ्गल, पुतलीसडकले पनि नृत्य र भजन प्रस्तुत गरेका थिए । स्थानीय व्यक्तिहरूको ठूलो सहभागिताबीच सम्पन्न उक्त कार्यक्रममा स्थानीय बुद्धिजीवीले पनि अध्यात्मविषयमा बोल्नुभएको थियो ।

## गुरूसेवा दलको तेह्रौं तालिम सम्पन्न

सिद्धाश्रम शक्ति केन्द्रले गत फाल्गुण २० र २१ गते द्विदिवसीयरूपमा गुरुसेवा दल तहका लागि तेह्रौं तालिम तथा प्रशिक्षण कार्यक्रम सम्पन्न गऱ्यो । तपस्यामूलक रूपमा रहेको यस तालिममा प्राप्त विषयवस्तुहरु पृथक् रहेका थिए ।

दुवै दिनको कार्यक्रम बिहान १०:०० बजे प्रार्थनाबाट शुभारम्भ भई निखिलेश्वरानन्द स्तुति, गोरक्ष स्तवन, गुरु आह्वान भजनपछि पूजन सम्पन्न भएपश्चात् आवाहयामी स्तोत्र, सच्चिदानन्द स्तवन, निखिल स्तवन, गुरु स्तवन, सिद्धाश्रम पञ्चक, गुरु स्तोत्र आदि सामूहिकरूपमा गायन गरिएको थियो । सद्‌गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यूले आफ्नो अवतरणकालमा दिनुभएका प्रेमसम्बन्धी प्रवचन पनि दुवै दिन सुनाइएको थियो । तालिममा प्रसाद वितरणको अभिभारा वहन गर्दै गुरु पूजन गर्ने सौभाग्य साधिकाहरू सुमित्रा लामा, मधुमती रंजित, शारदा पुडासैनी, गीता के.सी., लीलादेवी सिम्खडा, आरती सुनुवार तथा साधकहरु बृहस्पति सापकोटा र मेघराज घिमिरेले प्राप्त गर्नुभएको थियो ।

कार्यक्रम सञ्चालन गर्दै सावरमातृकाज्यूले विभिन्न घटनाक्रमहरूको बारेमा जानकारी गराउँदै विसंगतिहरूबाट बच्न कार्यकर्ताहरूलाई सतर्क गराउनुभएको थियो । प्रशिक्षणकै क्रममा सावर पन्थी १ र २ ज्यूले विभिन्न संस्थागत विषयहरूका बारे जानकारी गराउँदै कार्यकर्ताका प्रश्न तथा जिज्ञासाहरू समाधान गर्नुभएको थियो भने गुरु मन्त्रजप तथा विशेष ध्यान पनि सम्पन्न गराउनुभएको थियो ।

गोरक्ष निखिल युगका लागि क्षमतावान् कार्यकर्ताहरू निर्माण हुन् भन्नाका लागि कार्यकर्तामा विद्यमान अहंकारको नाश गर्दै मात्राबाट गुणमा फड्को मार्नुपर्ने गुरु आदेश बमोजिम गुरु सेवा दलका विभिन्न पोशाक र नम्बरहरू सोही दिनबाट खारेज भएको जानकारी गराइएको थियो । ध्यान, योग, आयुर्वेद, आनन्द मार्ग, ज्योतिष, तन्त्र मन्त्र र संगीतका विधाहरूमा दक्षता हासिल गरी आगामी दिनमा सोही विधाहरुसँग सम्बन्धित रंगका पोशाकहरू लगाएर गुरुकार्य गर्दै माथिल्लो तहमा जान सकिने कुरा पनि जानकारी गराइएको थियो ।

यस तालिमपश्चात् कार्यकर्ताहरूमा बेग्लै उत्साह र उमंग छाएको देखिन्थ्यो ।

## होलीमा होलिका यक्षिणी मंत्र

परमपूज्य सद्‌गुरुदेवहरूको कृपा, अनुकम्पावश गत फाल्गुण १६ गते फागु पूर्णिमाको पावन अवसरमा सिद्धाश्रम शक्ति केन्द्रले होलिका यक्षिणी मन्त्र प्रदान गऱ्यो । साधक साधिकाहरूले उक्त दिन प्राप्त मन्त्रलाई जप गरेर होलीलाई विशेषरूपमा उपलब्धिमूलक बनाउनुभएको थियो ।

॥ श्री गुरु चरणकमलेभ्यो नमः ॥

सर्वविदितै छ, आज समाज दिशाविहीन भइरहेको छ । विश्वभरि नै छल, झूट, स्वार्थ, अशान्तिको बिगबिगी छ । अनेकौँ भौतिक उपलब्धिहरू हाँसिल गरेता पनि आजको मानव दुःखी छ किनकि उसको चारैतर्फ सन्त्रासको वातावरण छ ।

राम्रो समाज निर्माण गर्नको लागि कोशिश त विश्वभरि नै भइरहेको छ । यसको लागि धेरै संघ संस्था कार्यरत छन् । असल नागरिकको उत्पादनको लागि विश्वभरि नै अनगिन्ती विद्यालय, विश्वविद्यालय कार्यरत छन् । तर पनि यी सबै प्रयास विफल भइरहेका छन् ।

विश्वव्यापीरूपमा नै भइरहेको प्रयास सफल हुन नसक्नुको पछाडि कारण त अवश्य नै छ । र यो एउटै कारण हो आध्यात्मिक शिक्षाको अभाव । आध्यात्मिक शिक्षा नै आजको विश्वको आवश्यकता हो । आध्यात्मिकताबिनाको शिक्षा अपूर्ण हुन्छ । अपूर्ण शिक्षाको उत्पादन पनि अपूर्ण हुन्छ र यसबाट नै सम्पूर्ण विश्व अपूर्ण बनिरहेको छ । आजको शिक्षाले बाहिरी जगत्का कुरा सिकाइरहेको छ, न्यूटन र आइन्सटाइनका उपलब्धि घोकाइरहेको छ । यी कुराहरूको पनि सायद आवश्यकता छ तर आफू स्वयंलाई पढ्न अझ बढी आवश्य छ । आजको शिक्षा पद्धति यसकारण अधूरो छ कि यसले व्यक्ति स्वयंलाई पढ्न सिकाएको छैन ।

अध्यात्म भनेको आत्माको अध्ययन हो, आफू स्वयंको अध्ययन हो । मानिस शरीर मात्र होइन, आत्मा पनि हो । बाहिरी जगत्को अध्ययनको साथसाथै आफ्नो आत्माको अध्ययन पनि आवश्यक बन्दछ । प्रत्येक व्यक्तिभित्र अपरिमित शक्ति रहेको हुन्छ । प्रत्येक व्यक्ति स्वयंमा नै 'पावर हाउस' हो । तर कस्तुरी मृगलाई आफूभित्र सुगन्ध भएको थाहा नभए झैँ मानिसलाई पनि यो कुराको आभाष नै भएको छैन । आभाष होस् पनि कसरी ? किनकि आजको शिक्षा पद्धतिले त यो कुरा सिकाएको नै छैन ।

जगत्मा 'गुरुहरूको अस्तित्व छ, ईश्वरको अस्तित्व छ र उहाँहरूको शक्तिबाट नै सारा सृष्टि, जगत् चलायमान छ' यो विश्वास मात्रले पनि व्यक्ति बलवान् बन्दछ उहाँहरूप्रति दृढ विश्वास राखी जब ऊ योग, ध्यान, मन्त्र, साधना आदि आध्यात्मिक मार्गहरूमा अग्रसर हुन्छ तब मात्र उसलाई आफूभित्रको असीमित शक्तिको आभास हुन थाल्दछ र स्वभाविकरूपमा उसको शक्तिको पनि जागरण हुन थाल्दछ ।

आफू स्वयंलाई चिनेर अध्यात्म मार्गमा अघि बढेको मानिस मात्रले शान्ति प्राप्त गर्दछ र यस्तो मानिसले नै विश्वलाई शान्ति दिन सक्छ । आफ्नो अपार अन्तर्निहित शक्तिलाई बुझेको मनिसले मात्र विश्वलाई नवीन चेतना दिन सक्छ ।

तसर्थ, आध्यात्मिक शिक्षा आजको युगको अत्यावश्यकता हो । प्रत्येक विद्यालय, विश्वविद्यालयमा आध्यात्मिक शिक्षा समावेश गर्नु आजको युगको अत्यावश्यक कदम भएको छ । र यस कदमले बनाउन सक्दछ विश्वलाई सुन्दर, शान्त र सुखमय । अस्तु ।

१-५: गुरुसेवा दलको तेह्रौं तालिम तथा प्रशिक्षण कार्यक्रम ६-७: महाशिवरात्रिको अवसरमा बसुन्धरा आश्रममा सम्पन्न शिव पूजन कार्यक्रम। ८-१०: पशुपतिमा सम्पन्न स्वास्थ्य शिविर तथा भजनकीर्तन कार्यक्रम । ११: विशालनगरमा सम्पन्न भजनकीर्तन कार्यक्रम। १२: थलीमा आयोजित भजनकीर्तन कार्यक्रम। १३: शंखमूलमा आयोजित पूजन एवं भजनकीर्तन कार्यक्रम। १४-१५: गो.नि.ज्यो.दि.वि.मा सम्पन्न नि:शुल्क स्वास्थ्य शिविर ।

गो. हु. का. द. नं. ९/०६०/६१
का. जि. द. नं. ७०/०५६

।। ॐ नमो गुरु मछिन्द्र, शब्द साँचा
पिण्ड काचा मेरा भक्ति, गुरुका शक्ति
नवनाथै जगाऊँ, चौराशीनाथै जगाऊँ
फुटो मंत्र ईश्वरो गुरु गोरख वाचा ।।

**दुर्लभ ग्रन्थहरूको अध्ययन गरौं ।**
**मानव जीवनलाई धन्य बनाऔं ।।**